# टुँडिखेल वरपरका अश्वारोही सालिकहरू

– श्यामसुन्दर राजवंशी
जयन्ती श्रेष्ठ

एसियाकै सबैभन्दा ठूलो परेड ग्राउण्ड भनी नाम कहलिएको काठमाडौंको विशालमय चौर टुँडिखेलको नामले प्रसिद्ध छ । यस टुँडिखेलको चारैतिर नियाली हेर्दा उत्तरमा रानीपोखरी घण्टाघर, पूर्वमा भद्रकाली पीठ, पश्चिममा धरहरा, सुन्धारा, महाँकाल भैरवको मन्दिर दृष्टिगोचर हुन आउँछ भने दक्षिणमा दशरथ रंगशाला नामक खेल मैदान रहेको छ । यसरी विभिन्न वास्तुकलाका धरोहरहरूबाट परिवेष्टित चौरको छुट्टै किसिमको वर्णनीय महत्त्व कायम रहेको छ । त्यसमाथि यस टुँडिखेल चौरको सुर-सुरहरूमा राखिएका अश्वारोही सालिकहरूले त थप आकर्षण प्रदान गरेको छ भन्नु कुनै अत्युक्ति नहोला ।

यी अश्वारोही सालिकहरूलाई टुँडिखेल चहार्न आउने सारा मानिसहरूले देखेकै हुनुपर्छ तर कुन-कुन सालिक क-कसको हो भनेर हरेकलाई थाहा नहुन सक्छ । ती सालिकहरूमध्ये प्रथम राणा प्रधानमन्त्री श्री ३ जंगबहादुर राणा, राणा प्रधानमन्त्री श्री ३ रणोद्धिप सिंह, राणा प्रधानमन्त्री श्री ३ वीर शमशेर, राणा प्रधानमन्त्री श्री ३ चन्द्र शमशेर, राणा प्रधानमन्त्री श्री ३ जुद्ध शमशेर तथा कमाण्डर इन चीफ धीर शमशेर र श्री ५ पृथ्वी वीर विक्रम शाह देव समेत गरी सात वटा अश्वारोही सालिकहरू रहेका छन् ।

यी सालिकहरू वि.सं. २०१७ साल अघिसम्म राजधानीका मुख्य-मुख्य चौबाटोहरूको चोक जस्तै शहीदगेटबाट, सुन्धारा जाने चोक, रत्नपार्कबाट बागबजार जाने चोक, टुँडिखेलबाट न्यूरोड जाने चोक, जमल रानीपोखरी चोक, विशाल बजार अगाडि तथा जावलाखेल चिडियाखाना अगाडि राखिएका थिए । सडक विस्तार गर्ने क्रममा यी सालिकहरूलाई हाल रहेको स्थानहरूमा स्थानान्तरण गरिएको र यसरी स्थानान्तरण गरिंदा श्री ३ जंगबहादुर राणाको सालिकको हातमा लिएको तरबार नै भाँचिएको थियो । यसरी स्थानान्तरण गरिएबाट सडकमा सवारी साधनको आवागमनमा सुविधा पुगेको महसूस हुन्छ भने सालिक जुन स्थानमा स्थापना भएको थियो त्यहीं स्थानमा रहेको भए त्यसको शोभा निश्चय नै बेग्लै हुने थियो होला भन्न सकिन्छ ।

यी अश्वारोही सालिकहरूको कलाकृति भावभङ्गिमा हेर्दा एकातर्फ वीरत्वको शान देखिन्छ भने अर्कोतर्फ पश्चिमी मुलुकबाट पाश्चात्य कला भित्रिन थालेको महसूस पनि प्रचूर मात्रामा पाइन्छ । खासगरी यस्तो सालिक युरोपको विभिन्न शहरको प्रमुख दोबाटो चौबाटोमा राखिने गरेको कुरा प्रथम राणा प्रधानमन्त्री जंगबहादुरले आफ्नो युरोप यात्राको बेला हेरेर आएका थिए । यिनको युरोप यात्राको क्रममा यिनका

पाँचौं भाइ रणोद्धिप सिंह र कान्छो भाइ धीर शमशेर पनि संगै गएको हुनाले जंगबहादुरको इच्छालाई भाइहरूले साकार बनाए भन्न सकिन्छ ।

यी अश्वारोही सालिकहरू बारे छुट्टाछुट्टै अध्ययनले सर्वसाधारण पाठकहरू तथा अनुसन्धानकर्ताहरूको निमित्त केही ठोस स्रोतको रूपमा सहयोग हुने विश्वासका साथ यी सालिकहरूको स्थापना मितिको क्रमवद्धताको आधारमा निम्नानुसारको विवरण प्रस्तुत गरिएको छ ।

## १. राणा प्रधानमन्त्री श्री ३ जंगबहादुरको अश्वारोही सालिक

काठमाडौंको सदर टुँडिखेलको पश्चिमपट्टि प्रसिद्ध भीमसेन स्तम्भ धरहरा देखिन्छ । धरहराको पूर्वपट्टिको चौबाटोनिर दशरथ रंगशाला जाने बाटोको शुरूवातमा नागस्थान रहेको छ । यस नागस्थाननिर घोडा माथि सवार भई पछिल्तिर फर्कीरहेको एवं आकर्षक सालिक खडा गरिएको छ । जुन सालिक जहाँनिया राणा शासनको संस्थापक श्री ३ प्रधानमन्त्री जंगबहादुर कुँवरको हो । यो सालिक मुनि रहेको मार्वल अभिलेखमा जंगबहादुरको प्रशस्ती मात्र छ तर अनावरण मिति उल्लेख भएको छैन । श्री पुरुषोत्तम शमशेरको "श्री ३ हरूको तथ्य वृत्तान्त" भन्ने पुस्तकमा वि.सं. १९४२ आषाढमा तात्कालिक श्री ३ रणोद्धीप सिंहबाट उक्त सालिकको उद्‌घाटन भएको भन्ने उल्लेख गरिएको छ । सो समारोहमा श्री ५ पृथ्वी वीर विक्रम शाह स्वयं उपस्थित होइबक्सेका थिए । यो सालिक युरोप भ्रमणका बेला वि.सं. १९०७ भाद्र १० गतेका दिन फ्रान्सको सर्टरी मैदानमा सैनिक परेड (मार्च पाष्ट) हेर्न घोडा चढी अगाडि बढ्दा घोडालाई नियन्त्रणमा ल्याई प्रोसेशन् कति पछि पर्‍यो भनी जंगबहादुरले प्रोसेशन्लाई फर्की हेरेको स्मरण गरी बनाउन लगाएको थियो भनी उल्लेख गरिएको छ ।

यो सालिक कहिले र कहाँ बन्यो भन्ने कुरामा लेखकहरूको धारणामा अलिकति फरक परेको पनि देखिन्छ किनकि जंगबहादुर र रणोद्धिप सिंहको सालिक फ्रान्समा बनेको हो र अन्य सालिक बेलायतमा बनेको भन्ने चर्चा पाइन्छ । तर जंगबहादुरको सालिकमुन्तिर एक ठाउँमा T. Brock S 1881 London भनी प्रष्टसंग अक्षर अंकित गरिएबाट जंगबहादुरको सालिक फ्रान्समा बनेको नभई बेलायतमा नै बनेर आएको प्रमाणित गर्दछ । उक्त सालिकको अनावरण इ.सं. १८८१ तद्‌नुसार वि.सं. १९३८ मा भएको हो ।

श्री ३ जंगबहादुरलाई चिनाउनु पर्दा यिनलाई तीक्ष्ण बुद्धि र प्रभावशाली व्यक्तित्व भएका असल कूटनीतिज्ञ र अवसरवादी व्यक्तिको रूपमा लिइन्छ । यिनको जन्म इ.सं. १८१७ जुन १८ तद्‌नुसार वि.सं. १८७४ आषाढ सुदि ४ रोज ४ का दिन काजी वालनरसिं कुँवरका कान्छी पत्नी गणेशकुमारी (काजी नयन सिं थापाकी छोरी) को कोखबाट जेष्ठ पुत्रको रूपमा जन्म भएको थियो ।

१२ सेप्टेम्बर १८४६ मा भएको भयानक कोत हत्याकाण्डको रातमा नै यिनले नेपालको महामात्यको पगरी पाएका थिए भने त्यसको केही दिनपछि घटेको भण्डारखाल हत्याकाण्डबाट स्वत: सम्पूर्ण अधिकार यिनलाई प्राप्त हुन आएको थियो । यसप्रकार मौकामा फाइदा उठाउन सफल भए पछि अगस्ट ६, १८५६ मा नेपालको शासनाधिकार आफ्नो शेषपछि आफ्ना भाइ छोराहरूमा सर्ने प्रथा पनि बसाए ।

जंगबहादुरको बेलायत यात्राबाट फर्कनासाथ नेपालको प्रधानमन्त्रीलाई "His Excellency" को सम्मान दिने परम्परा बसाले । यिनले आफ्नो कार्यकालमा अंग्रेजलाई आफ्नो मित्र बनाउने उद्देश्यले निकै उपकार गरेको र सन् १८५७ मा भारतमा घटेको सिपाही विद्रोह काण्डमा नेपालले अंग्रेजलाई नै सहयोग गरेको कारण सन् १८५९ अक्टोबरमा ब्रिटिस भारतबाट "नाइट ग्राण्ड क्रस अफ दि अर्डर अफ दि वाथ"को तक्मा पाए भने तिब्बतसंग युद्ध गरी नेपालको हित अनुकूल थापाथली सन्धि गरे वापत चीन सम्राटबाट १९ अप्रील १८७२ मा "थोड लिङ पिम्माको काङ वाङ स्याङको उच्चतम चिनियाँ उपाधी पाए । यस उपाधीको शाब्दिक अर्थ- Leader of the army the most brave in every enterprise perfect in every thing master of the army. हो ।

२५ फरवरी १८७७ (वि.सं. १९३३ फागुन १६ गते) का दिन ६१ वर्षको उमेरमा पत्थरघट्टा घाटमा जंगबहादुरको मृत्यु भयो ।

## २. राणा प्रधानमन्त्री श्री ३ रणोद्विप सिंहको अश्वारोही सालिक

काठमाडौंको शहर टुँडिखेलको दक्षिण-पश्चिम कुना याने जंगबहादुरको सालिकको हाराहारीमा उत्तरपट्टि घोडाले आफ्नो अगाडिको दुवै खुट्टा उचालेको अत्यन्त आकर्षक सालिक खडा रहेको छ । यो सालिक वि.सं. २०१७ साल अघिसम्म रत्नपार्कबाट बागबजारतर्फ जाने चौबाटोको चोकमा रहेको थियो । यस चौबाटोलाई हालसम्म पनि रणोद्विप चोक भन्ने गरिन्छ । यस ठाउँबाट स्थानान्तरण गरी हाल रहेको स्थानमा सुशोभित गरिएको हो ।

राणा प्रधानमन्त्री श्री ३ रणोद्विप सिंहको अश्वारोही सालिकको स्थापना कुन मितिमा भएको थियो भन्ने स्पष्ट उल्लेख सालिक मुनि मार्वल अभिलेखमा पनि छैन । तर अभिलेखमा राणा प्रधानमन्त्री श्री ३ रणोद्विप सिंहले आफू जिवित छँदै ५९ वर्ष ६ महिना (साँढे उनसाठी) को उमेरमा राखेको भन्ने उल्लेख छ । यिनको जन्म मितिसंग तुलना गर्दा इ.सं. १८८५ अक्टोबर महिनामा यो सालिक अनावरण भएको थियो होला भन्न सकिन्छ ।

श्री ३ जंगबहादुरको अश्वारोही सालिक पनि रणोद्विप सिंहले नै बनाउन दिएको हुनाले रणोद्विप सिंहको आफ्नो अश्वारोही सालिक पनि बेलायतबाट नै बनाएर ल्याएको हुनु बढी सम्भावना छ । यस सालिकको मुनि भाँचिएको तोप तथा तोपका पाङ्ग्राहरू देखाइ राखेको हुँदा यसमा युद्धको मैदानको एक झलक पाइन्छ । "श्री ३ हरूको तथ्य वृत्तान्त" भन्ने पुस्तकमा सन् १८५७ का घटना घटेको गदरको युद्धमा रणोद्विप सिंहले जुन वीरता देखाए त्यसको संस्मरणमा यो सालिक बनाए भन्ने व्यहोरा उल्लेख पाइन्छ ।

सालिकको अभिलेखमा यिनको प्रशस्तिमा "श्रीमदति प्रचण्ड भुजदण्डेत्यादि, के.सि.एस.आइ. थोङ लिङ पिम्मा को काङ वाङ स्याङ, प्राइमिनिस्टर याण्ड कमाण्डर इन चीफ" भनि लेखिएको छ ।

काजी वालनर सिंह कुँवर र उनका पत्नी गणेशकुमारीको कोखबाट पाँचौं पुत्रको रूपमा सन् ३ अप्रील १८२५ (वि.सं. १८८२) मा रणोद्विप सिंहको जन्म भएको थियो ।

राणा प्रधानमन्त्री श्री ३ जंगबहादुरको मृत्युलाई गोप्य राखि धीर शमशेरले तत्कालीन युवराज त्रैलोक्य विक्रम शाहलाई प्रधानमन्त्री अस्वस्थ भएको हुँदा हेर्नलाई भनि पत्थर घट्टातर्फ पठाइ यता सन् १८५६ मा भएको लालमोहर बमोजिम रणोद्विप सिंहलाई नेपालको प्रधानमन्त्री एवं श्री ३ महाराज पदमा २५ फरवरी १८७७ का दिन आसिन गराए ।

यिनले आफ्नो दाजु जंगबहादुर राणाको कार्यकालमा घटेको तेस्रो नेपाल-तिब्बत युद्ध (१८५५-५६) मा नेपाली फौजको नेतृत्व गरेको र सन् १८५७ मा घटेको भारतको सिपाही विद्रोहमा पनि नेपाली फौजको नेतृत्व गरेका थिए ।

यिनले सन् १८६२ मा प्रधानसेनापति (कमाण्डर इन चीफ) को पद्वी पाए भने बेलायतको प्रिन्स अफ वेल्सबाट **सन् १८७६ मा** KCSI (Knight Commander of the Star of India) को उपाधी पाए । सन् १८८३ मा चीन सम्राट Kwang Hsu बाट थोङ लिङ पिम्माको काङ वाङ स्याङको उपाधी र पोशाकबाट विभूषित भए ।

आफ्नो कान्छो भाइ धीर शमशेरको महत्त्वाकांक्षी छोराहरूको हातबाट २२ नोभेम्बर १८८५ (वि.सं १९४२) का दिन हत्या भई यिनको असामयिक मृत्यु भएको थियो ।

## ३. कमाण्डर इन चीफ जनरल धीर शमशेरको अश्वारोही सालिक

काठमाडौं सदर टुँडिखेलको पश्चिम-उत्तर कुनामा याने महाँकाल भैरव मन्दिरको उत्तरपट्टि राणा प्रधानमन्त्री जंगबहादुरको कान्छो भाइ धीर शमशेरको सालिक रहेको छ । यो सालिक २०१७ सालपछि अन्यत्रबाट स्थानान्तरण गरी ल्याई स्थापना गरिएको हो तर यसको मूलस्थान कुन ठाउँमा थियो यकीनसंग भन्न सकिएन ।

राणा प्रधानमन्त्री हुने क्रममा रणोद्विप सिंह पछि धीर शमशेरको पालो थियो । यिनको १७ भाइ छोराहरू थिए जसमध्ये वीर शमशेर सबभन्दा जेठो थियो । दुर्भाग्यवश धीर शमशेर प्रधानमन्त्री हुन नपाउँदै मृत्यु भएको हुँदा १७ भाइ छोरालाई अत्यन्तै छटपटी भएको थियो । परिणाममा ४२ साल पर्वको रूपमा भयानक हत्याकाण्डको घटना घटाई धीर शमशेरको जेठो छोरा वीर शमशेर नेपालको प्रधानमन्त्री एवं कमाण्डर इन चीफमा नियुक्त भएको थियो । श्री ३ वीर शमशेरले वि.सं. १९५० फागुन २८ गतेका दिन आफ्नो पिता धीर शमशेरको संस्मरणमा सालिक स्थापना गराए । सालिक स्थापना भएको मिति सालिक मुनि रहेको मार्बल अभिलेखमा पनि उत्कीर्ण गरिएको छ ।

सालिकको अभिलेख अनुसार यिनले श्री ३ को पद्वी नपाएको हुँदा प्रशस्तिमा "श्री मद्राज कुमार कुमारात्मंज श्री कम्याण्डर इन चीफ जनरल" मात्र उल्लेख गरिएको छ ।

काजी वालनरसिंह कुँवर र गणेशकुमारीको कोखबाट कान्छो छोराको रूपमा वि.सं. १८८४ कार्तिक १४ गते आइतबारको दिन धीर शमशेरको जन्म भएको थियो । राणा प्रधानमन्त्री जंगबहादुरको सात भाइहरूमा जंगबहादुर पछि दोस्रो चतुर राजनीतिज्ञमा धीर शमशेरको नाम आउँछ । आफ्नो दाजु जंगबहादुर एवं रणोद्विप सिंहको प्रधानमन्त्रीत्वकालमा घटेका अत्यन्त जोखिमपूर्ण घटनाहरूमा धीर शमशेरको बुद्धि चातुर्यको निकै प्रशंसा भएको थियो ।

कमाण्डर इन चीफभन्दा पश्चिम कमाण्डिङ जनरलमा सैनिक शक्ति बढि हुने भएकोले धीर शमेशरले आफु कमाण्डर इन चीफ बन्ने पालो आए पनि प.क.ज. नै बनी रहने प्रस्ताव राखेका थिए । त्यस प्रस्तावप्रति जंगबहादुरका छोरा जगतजंगलाई मान्य नभएको कारण कमाण्डर इन चीफमा पदासीन हुन वाध्य भए ।

जंगबहादुर राणा पछि रणोद्विप सिंहलाई नेपालको प्रधानमन्त्री बनाउने चालबाजीमा धीर शमशेर सफल भएका थिए । जंगबहादुरका भाइहरूमध्ये बमबहादुर राणा, कृष्णबहादुर राणा, बद्रीनरसिंह राणा, जगत शमशेरको मृत्यु भइसकेको हुँदा रणोद्विप सिंह पछि धीर शमशेर नै प्रधानमन्त्री हुने रोलमा थिए ।

जनरल धीर शमशेरको मृत्यु वि.सं. १९४१ आश्विन ३० गते मंगलवारका दिन भएको थियो ।

## ४. राणा प्रधानमन्त्री श्री ३ वीर शमशेरको अश्वारोही सालिक

काठमाडौं सदर टुँडिखेलको पूर्व उत्तर कुनामा याने नेपाल विद्युत प्राधिकरणको अगाडि रहेको अश्वारोही सालिक राणा प्रधानमन्त्री वीर शमशेरको हो । यो सालिक २०१७ साल अघिसम्म वीर अस्पताल अगाडिको दोबाटोको चोकमा थियो भन्ने देख्ने मानिसहरूको भनाइ छ । यसलाई स्थानान्तरण गर्दा हाल अवस्थित रहेको स्थान उपयुक्त ठहरियो भन्नु पर्दछ ।

नेपालको प्रधानमन्त्रीत्व जंगबहादुरले आफ्नो भाइहरूमा सर्दै जाने प्रथा बसाले । यस प्रथा अनुसार वीर शमशेर लगायत १७ भाइहरूको पालो आउनु असम्भव नै थियो तापनि आफ्नो पिता धीर शमशेर प्रधानमन्त्री बन्न पाएको भए केही राहत हुने थियो तर समय परिस्थिति आफ्नो अनुकूल नभए पछि आफ्ना जेठा बाबु रणोद्विप सिंह लगायत जंगबहादुरका छोरा नाती सबैलाई पन्छाई वीर शमशेर प्रधानमन्त्री बन्न सफल भए ।

श्री ३ वीर शमशेरको सालिक मुनि रहेको मार्बल अभिलेखमा यो सालिक स्थापना भएको मिति वि.सं. १९६४ वैशाख १६ गते सोमबार उल्लेख गरिएको छ । अभिलेखमा यिनको प्रशस्तिमा "श्री मदति प्रचण्ड भुजदण्डेत्यादि, जी.सी.यस.आइ, थोङ लिङ पिम्मा कोकाङ वाङ स्याङ, प्राइमिनिष्टर याण्ड कम्याण्डर इन चीफ" भनी उल्लेख गरिएको छ ।

श्री ३ जंगबहादुर एवं श्री रणोद्विप सिंहले "His Excellency" को सम्मान पाएका थिए भने श्री ३ वीर शमशेरले "His Highness Maharaja" को सम्मान पाएका थिए ।

वीर शमशेरको जन्म वि.सं. १९०९ मार्ग २१ गते शुक्रवारको दिन धीर शमशेर कुँवरको प्रथम पुत्रको रूपमा भएको थियो । यिनले आफ्ना भाइहरूको सहयोग लिएर ४२

साल पर्वको हत्याकाण्ड गराई नेपालको प्रधानमन्त्रीमा आसीन भएको हो ।

नेपालको इतिहासमा यिनको प्रधानमन्त्रीत्वकाललाई राष्ट्रिय शोषणको नयाँ परम्परा थालनी भएको कालमा गनिने हुँदा त्यति राम्रो मानिदैन । तापनि इ.सं. १८९२ मा भारत सरकारबाट KCSI एवं GCSI जस्तो गरिमामय उपाधीद्वारा विभूषित भए भने इ.सं. १८९८ मा चीन सम्राटबाट थोङ लिङ पिम्माको काङवाङ स्याङको उपाधी समेत पाए ।

नेपालको इतिहास तर्फ फर्केर हेर्ने हो भने स्वभाविक तवरले कालगतिले मृत्यु हुने प्रधानमन्त्रीमा वीर शमशेर पनि थिए । यिनको मृत्यु वि.सं १९५७ फागुन २३ गते मंगलवारको दिन भएको थियो ।

## ५. राणा प्रधानमन्त्री श्री ३ चन्द्र शमशेरको अश्वारोही सालिक

काठमाडौं सदर टुँडिखेलको दक्षिण पूर्व कुना याने भद्रकाली देवी पीठको दायाँपट्टि राणा प्रधानमन्त्री चन्द्र शमशेरको अश्वारोही सालिक रहेको छ । यो सालिक २०१७ साल अघिसम्म चन्द्र शमशेरले इ.सं. १९२५ मा बनाएको सैनिक अस्पताल अगाडि टुँडिखेलबाट न्यूरोड जाने बाटोको चोकमा राखिएको थियो । उक्त सालिकले आफूले बनाएको अस्पताल हातले देखाइ आफ्नो कीर्ति सबैले देखोस् भनेर विशेष महत्त्वका साथ औंल्याएको छ ।

हुनत श्री ३ चन्द्र शमशेरले यो सालिक आफ्नो जीवनकालमा नै स्थापना गर्ने उद्देश्यले सालिक राख्ने आसन बनाए र त्यस आसन मुनि आफूले गरेका सम्पूर्ण कार्यहरू समेत चित्रण गरी चित्र बनाइ राखेका थिए । चन्द्र शमशेरको अश्वारोही सालिक बेलायतबाट बनेर पानी जहाजबाट ल्याउँदा जहाज पल्टेर समुद्रमा खस्न पुग्यो । तब आफ्नो जीवित समयभित्र आफ्नो सालिक स्थापना गर्न सकेन । तर त्यसबेला सालिकको बीमा गरिएको हुँदा बीमा कम्पनीले क्षतिपूर्ति दिएपछि पुन: सालिक बनाएर ल्याउँदासम्ममा चन्द्र शमशेरको मृत्यु भइसकेको थियो । त्यसकारण चन्द्र शमशेरको सालिकको अनावरण भीम शमशेरले गरेका थिए तर कुन सालमा बनेको र कुन सालमा अनावरण भएको थियो भन्ने कुरा कुनै स्रोतबाट भेट्टाउन सकिएन ।

जनरल धीर शमशेरका १७ भाइ छोराहरूमध्ये चन्द्र शमशेर छैठौं छोरा थिए त्यस्तै प्रधानमन्त्रीत्वको सौभाग्य हासिल गर्ने राणामा पनि छैठौं नै थिए । यिनको जन्म इ.सं. १८६३ जुलाई ८ मा भएको थियो भने यिनको मृत्यु इ.सं. १९२९ नोभेम्बर २५ मा भएको थियो । यिनको जन्म र मृत्यु भएको मिति पुस्तकीय श्रोतहरूबाट लिइएको हो ।

## ६. राणा प्रधानमन्त्री श्री ३ जुद्ध शमशेरको अश्वारोही सालिक

काठमाडौं सदर टुँडिखेलभन्दा दक्षिणपट्टि याने भद्रकाली देवी पीठको बायाँपट्टि रहेको अश्वारोही सालिक राणा प्रधानमन्त्री जुद्ध शमशेरको हो । यो सालिकको बनावट अन्य सालिकभन्दा केही भिन्न शैलीको देखिन्छ । अन्य सबै सालिकहरू श्रीपेच पहिरेको अवस्थाको छ भने यो सालिकमा हेल्मेट स्वरूपको टोपी लगाइएको छ ।

राणा प्रधानमन्त्री जुद्ध शमशेरको सालिक चन्द्र शमशेरको सालिकको हाराहारीमा राखिएको छ तर यो सालिकलाई यस स्थानमा कहाँबाट स्थानान्तरण गरी ल्याइएको हो यकीनसाथ भन्न सकिएन । तर अहिलेसम्मको अध्ययन र खोजबाट यही सुनिन्छ कि जावलाखेलको चिडियाखानाभन्दा वाहिर जुद्ध शमशेरको यो सालिक राखिएको थियो । यसलाई पछि २०१७ सालमा अन्य सालिक स्थानान्तरण गर्दा यसलाई पनि जावलाखेलबाट ल्याई सैनिक मुख्यालय भद्रकालीको उत्तरपट्टि राखिएको हो ।

यस सालिकको मुनि चारै पाटोमा जुद्ध शमशेरको प्रधानमन्त्रीत्वकालमा भए गरेका कार्यहरूको वर्णन शिलालेखमा उत्कीर्ण गरिएको छ । उक्त अभिलेख अनुसार वि.सं. २००५ साल जेष्ठ ३१ गते रोज १ का दिन श्री ३ मोहन शमशेरबाट उद्घाटन गराई निजका पुत्र ले.ज. नारायण शमशेर ज.व.रा.ले राखेका थिए ।

अभिलेखमा यिनको प्रशस्ति "श्री मदति प्रचण्ड भुजदण्डे त्यादि ओजस्वी राज राजन्य प्रोज्वल नेपाल तारा अतुल ज्योतिर्मय त्रिशक्ति पट्ट अति प्रवल गोरखा दक्षिण वाहु पृथुलाधीश" भनी दिइएको छ । यिनले ब्रिटिश भारतको तर्फबाट GCB - GCLH - GCSI लगायत थुप्रै मान पद्वी पाए भने चीन सरकारको तर्फबाट "यितेङ पावतिङ शुन चि यान लुचुया श्याङ" पदवी पाए ।

जनरल धीर शमशेरका १७ भाइ छोरामध्ये जुद्ध शमशेर १० औं छोरा हुन् । यिनको जन्म वि.सं. १९३२ वैशाख कृष्ण ४ का दिन भएको थियो । यिनी १७ भाइ खलकमध्येको अन्तिम प्रधानमन्त्री थिए । श्री ३ भीम शमशेरको मृत्यु वि.सं. १९८९ सालमा भए पछि जुद्ध शमशेर प्रधानमन्त्रीको रूपमा आसीन भए । नेपालको इतिहासमा यिनी एक सुधारवादी प्रधानमन्त्रीको नाममा गनिन्छ । यिनले वि.सं. २००२ सालमा आफ्नो जीवित अवस्थामा नै शासन सत्ता त्याग गरी भीम शमशेरका छोरा पद्म शमशेरलाई प्रधानमन्त्रीत्व सुम्पेर आफू "राजर्षि" बनी देश त्यागेका थिए ।

## ७. श्री ५ पृथ्वी वीर विक्रम शाहको अश्वारोही सालिक

काठमाडौंको सदर टुँडिखेलसंगै पूर्वपट्टि भद्रकाली पीठ देवीस्थान रहेको छ । यस पीठ स्थानको पूर्वपट्टि स्वर्गीय श्री ५ महाराजाधिराज पृथ्वी वीर विक्रम शाहदेवको अश्वारोही सालिक उभ्याइएको छ । यस सालिकको अनावरण तत्कालीन श्री ५ महाराजाधिराज त्रिभुवन वीर विक्रम शाहदेवबाट मिति वि.सं. १९८६ फागुन २ गते सोमवार तद्नुसार इ.सं. १९२९ मार्च ३ तारिखका दिन भएको थियो । यो कुरा यसै सालिकमुनि रहेको मार्वलमा अंकित अभिलेखमा उत्कीर्ण गरिएको छ । अभिलेखमा नेपाली भापा र अंग्रेजी भाषा दुवै प्रयोग गरिएका छन् ।

अभिलेखमा उल्लेख भए अनुसार यिनको प्रशस्तिमा "स्वस्ति श्री गिरिराज चक्र चुडामणि नरनारायणेत्यादि विविध विरुदावलि विराज मान मानोन्नत श्री मन्महाराजाधिराज श्री श्री श्री महाराज पृथवी वीर विक्रम जङ्गबहादुर शाह बहादुर शम्शेर जंग देवाना सदा समर विजयी नाम्" भनी लेखिएको छ ।

अंग्रेजी भाषामा लेखिएको अभिलेख पाठमा "His Majesty" भनी सम्बोधन गरिएको पाइन्छ । वि.सं. १९७७ (इ.सं. १९२०) भन्दा अघि नेपाल दरवार भनी सम्वोधन गरिन्थ्यो भने श्री ५ लाई His Highness भनी सम्वोधन गरिन्थ्यो । प्रथम विश्व युद्धमा नेपाली वीरहरूले विभिन्न स्थानमा जुन अतुलनीय वीरता प्रदर्शन गरेको हुँदा सो युद्धमा ब्रिटेन पक्षधर राष्ट्रहरूको नै विजय भएकोले अंग्रेज सरकार प्रसन्न भई त्यहाँ उप्रान्त श्री ५ लाई His Majesty सम्वोधन गर्ने गरेको थियो ।

यिनको राज्यारोहण कहिले भएको थियो यो कुरा भने त्यसै अभिलेखमा उल्लेख भएको पाइन्न । इतिहासलाई सरसर्ती पल्टाउने हो भने श्री सुरेन्द्रको मृत्यु वि.सं. १९३८ मा हुँदा खाली हुन आएको राजसिंहासनमा नाबालक नाति युवराज पृथ्वी वीर विक्रम शाहलाई राज्यारोहण गरिएको कुरा उल्लेख छ । राणा शासकहरूको षडयन्त्रमा परी यिनको पिता त्रैलोक्य विक्रम शाहको युवराज मै मृत्यु भइसकेको थियो । यिनको बाल्यावस्था त्यसै बित्यो जब युवा अवस्थामा टेक्न थालियो तब यिनले चाल पाए कि नेपालको महाराजाधिराज नाम मात्रको मूर्ति सरह रहेछ । राणा विरोधी गुटमा सामेल भएको कुरा तत्कालीक राणा प्रधानमन्त्री चन्द्र शमशेरलाई मनपरेको थिएन । पछि यिनलाई पनि विस्तारै लाग्ने खालको विष प्रयोग गरी राणाहरूद्वारा मारियो भन्ने चर्चा इतिहासमा पाइन्छ । समग्रमा भन्नु पर्दा राणा शासकहरूले जुन प्रकारले जहाँनिया प्रथा चलाई आएको हो सो प्रति सख्त असन्तोष आफ्नो पिताले जुन देखाएथे सोही अनुरूपको भूमिका निर्वाह यिनले पनि गरेका थिए । परन्तु परिणाममा आफ्नो पिताको विष प्रयोग भइ जसरी असामयिक मृत्यु भएथ्यो त्यस्तै प्रकारले यिनले पनि असामयिक मृत्युवरण गर्नुपऱ्यो ।

यिनको जन्म वि.सं. १९३२ श्रावण २५ गते भएको र स्वर्गारोहण वि.सं. १९६८ मंसिर २५ गतेका दिन भएको थियो ।

अन्तमा यसरी विभिन्न दोबाटो चौबाटोहरूमा सजिएर रहेका यी अश्वारोही सालिकहरू टुँडिखेलको सुर-सुरमा ल्याइ सजाइए पनि यी सालिकहरूको महत्त्व घटेको नभइ टुँडिखेलकै सुन्दरता बढ्न गएको भनी चित्त बुझाउन सकिन्छ । खास भन्ने हो भने यी सालिकहरूले तत्कालीन राणा शासकहरू कलाकृति प्रति कति शौखिन थिए भन्ने कुरा हर हमेशा दर्शाइ रहेको हुन्छ । बरू यी स्मारकहरूलाई सर्वसाधारण व्यक्तिले पनि नजिक गई हेर्न सकिने एवं त्यसको परिसर स्वच्छ सफा कायम राख्न सके र पर्याप्त स्याहार संभार भएमा त्यसप्रति साँचो मानेमा न्याय भएको मान्न सकिन्छ । अन्यथा यी राणा प्रधानमन्त्रीको सालिकहरू प्रति उपेक्षित भएकै हो भन्ने भान पर्नु अस्वाभाविक हुने छैन । यी सालिकहरू पनि हाम्रो सम्पदा हो र १०४ वर्षको राणाकालीन इतिहासको प्रतिबिम्वको रूपमा रहेकोले यसलाई संरक्षण गरी राख्नु हाम्रो दायित्व हुन आउँछ ।

## सालिकहरूको अभिलेख विवरण

श्री ३ जङ्गबहादुर राणाको सालिकको अभिलेख

स्वस्ति श्री मदति प्रचण्ड भुजदण्डेत्यादि श्री श्री श्री
महाराज सर जङ्ग बहादुर राणा जी.सी.बी
अैण्ड जी सी एस आई थोङ लिन् पिम्मा कोकाङ वाङ
स्यान प्राइमिनिष्टर याण्ड कम्याण्डर इन
चिफ नेपाल १८७४ साल आषाढ सुदि ४ रोज ४ को
जन्म १९३३ साल फागुन सुदि १२ रोज १ मा मुक्त
HIS EXCELLENCY MAHARAJA SUR JUNG
BAHADOOR
RANA G.C.B. & G.C.S.I. THONG LING PIMMA
MA
KO KANG WANG SIAN PRIME MINISTER
COMMANDER IN CHIEF NEPAL
(सबभन्दा तल उर्दु अक्षरमा लेखिएको)
घोडाको पाठपिठमा
T. BROCKS
LONDON 1881

श्री ३ रणोद्विप सिंह राणाको सालिकको अभिलेख

स्वस्ति श्री मदति प्रचण्ड भुजदण्डेत्यादि श्री श्री श्री
महाराज रणोद्विप सिंह राणा बहादुर के.सी.यस.आई.
थोङ लिम् पिम्मा कोकाङ वाङ स्यान प्राइम मिनिस्टर
याण्ड कम्याण्डर इन चिफ
नेपाल वर्ष ५९ मैन्हा ६ को उमेरमा स्थापना भयाको
तसवीर शुभम्
HIS EXELLENCY MAHARAJA SIR RUNWOODEEP SINGH RANA BAHADOOR KCSI THONG LING PIM MA KOKANG WANG SIAN PRIME MINISTER & COMMANDER IN CHIEF OF NEPAL
THIS STATUE IS ERECTED AT HIS 59 1/2 YEARS OF AGE.

जनरल धीर शमशेरको सालिकको अभिलेख

स्वस्ति श्री मद्राज कुमार कुमारात्मज श्री कम्याण्डर
इन चीफ जनरल धीर शमशेर जङ्ग बहादुर राणा
संवत् १८८४ शाके १७४९ कार्तिक १४ गते कार्तिक
शुक्ल ९ आदित्यवारको जन्म
संवत् १९४१ शाके १८०६ आश्विन ३० गते कार्तिक
कृष्ण ११ मंगलवारमा मुक्त
संवत् १९५० शाके १८१५ फाल्गुन शुदि ३ फाल्गुन
२८ गते शनिवारका दिन सालिक स्थापना भएको
HIS EXCELLENCY THE COMMANDER IN CHIEF GENERAL DHIR SHUMSHERE JUNG BAHADHOOR RANA
BORN 28th OCTOBER 1827 A.D.
DIED 14th OCTOBER 1884 A.D.
THE STATUE WAS UNVEILED ON 10TH MARCH 1894 A.D.

श्री ३ वीर शमशेरको सालिकको अभिलेख

स्वस्ति श्री मदति प्रचण्ड भुजदण्डेत्यादि श्री श्री श्री
महाराज वीर शम्शेर जङ्ग बहादुर राणा जी.सी.
एस. आई. थोङ लिङ पिम्मा कोकाङ वाङ स्यान
प्राइमिनिष्टर आण्ड कम्याण्डर इन चीफ नेपाल

संवत् १९०९ शाके १७७४ मार्ग २१ गते मार्ग कृष्ण ३० शुक्रवारको जन्म संवत् १९५७ शाके १८२२ फागुन २३ गते फागुन शुक्ल १५ मंगलवार मुक्त संवत १९६४ शाके १८२९ चैत्र शुक्ल १५ बैशाख १६ गते आदित्यवारका दिन सालिक स्थापना भएको
HIS HIGHNESS MAHARAJ BIR SHUMSHERE JUNG
BAHADUR RANA G C S I, THONG LIN PIM MA KO KANG
WANG SIAN PRIME MINISTER AND COMMANDER-IN-CHIEF NEPAL
BORN 10th DECEMBER 1852 A.D.
DIED 5th MARCH 1901 A.D.
THE STATUE WAS UNVEILED ON 23th APRIL 1907 A.D.

श्री ३ जुद्ध शमशेरको सालिकको अभिलेख

१. स्वस्ति श्रीमदति प्रचण्ड भुजदण्डेत्यादि ओजस्वी राज राजन्य प्रोज्वल नेपाल तारा अतुल ज्योतिर्मय त्रिशक्ति पट्ट अति प्रवल गोरखा दक्षिण वाहु पृथुलाधीश श्री श्री श्री महाराज जुद्ध शमशेर जङ्ग बहादुर राणा जी.सी.बी.जी.सी.एल.एच.जी.सी.यस.आई.जी.सी.यन.एल. जी.सी.यम.यस.यम.यल.जी.सी.आई.ई.जी.के.आर.के. यितेङ पावतिङ शुन चि यान लुचुया श्याङ आनरेरी जनरल ब्रिटिश आर्मी आनरेरी कर्णेल अफ अल दि गोरखा राइफल रेजिमेण्टस् इण्डियन आर्मी प्राइम मिनिष्टर याण्ड सुप्रिम कम्याण्डर इन चीफ श्री स्वर्गवासी कम्याण्डर इन चीफ जनरल धीर शमशेर जङ्ग बहादुर राणाका दशौं पुत्र श्री ३ महाराज जुद्ध शमशेर जङ्ग बहादुर राणाको सम्वत् १९३२ साल बैशाख कृष्ण ४ मा जन्म भएको हो सं. १९४७ सालमा पाटनको ब्रिगेडको बृगेडियर १९५८ सालमा उ.क.ज. सोही वर्षमा द.क.ज १९६४ मा पु.क.ज. १९६७ मा कायम मुकायम जङ्गी लाठ १९७१ मा जङ्गी लाठ १९८६ मा श्री कम्याण्डर इन चीफ भै वहाँले सं. १९८९ मा यस राज्यको प्राइमिनिष्टरी ओहदा उठाई बक्सियो ।

मुलकलाई उन्नति मार्गमा ल्याउने तजवीज भैरहेको समयमा ९० सालको भयङ्कर भूकम्प आइलाग्यो फेरी द्वितिय महासमर रुपि अर्को महान् संकष्ट आइलागी बाधा पाऱ्यो। त्यस्तो बाधा परी आए तापनि हिम्मत नहारी मुलुकको गौरव बढाउने र दुनियाँको उन्नति हुँदै जाओस् भन्ने तर्फ सदा दत्तचित्त होइ बक्सिन्थ्यो । भूकम्पको मारबाट दुनियाँलाई उद्धार गर्न उहाँबाट गरी बक्सेको कामको स्मारक आजको काठमाडौंमा खडा नै छ र मुलुकको आर्थिक अवस्था सुधार्ने उद्देश्यले उद्योग धन्दा व्यवसाय बढाउनाका लागि श्री ३ महाराजबाट भरमगदुर गरि बक्सियो । त्यसको फलस्वरुप उद्योग परिषद, कृषि परिषद, घरेलु इलम प्रचारक अदा मधेशमा ठाउँठाउँमा सरकल अफिस इत्यादि खडा गरी बक्सियो वहाँकै उत्तेजनाले नेपालमा सर्वप्रथम नेपाली नोटको चलन नेपाल ब्याङ्क, विराटनगर जुट मिल्स, मोरङ कटनी मिल्स इत्यादि ज्वाइनष्टाक कम्पनीहरू खडा गरी बक्सेको र कलकारखाना चलाउनका निमित्त सरल हिसावसित विद्युत शक्ती मिल्ने गराई बक्सने उद्देश्यले मोरङ हाइड्रो इलेक्टिक कम्पनी खडा गराई बक्सियो नेपाल राजधानीमा बत्ती तथा पावरको अभाव पूर्ति गर्नाका खातिर सुन्दरी जलमा दोश्रो विजुलीका उत्पादन केन्द्र खोली बक्सियो ।

२. मुलुकमा उन्नती शिक्षा विना हुन नसक्ने सम्झि मौसुफबाट शिक्षा प्रचारको निमित्त नेपाल ४ भाज्याङ भित्र बाहिर पहाड मधेश ठाउँ ठाउँमा महास्कूलहरु स्थापना गराई एस.एल.सी. परिक्षाका प्रथा पनि चलाई वक्सियो । कालेज स्कूल पाठशालाका प्रोफेसर माष्टर पण्डितहरुको तलव वढाई गरीव विद्यार्थीहरुलाई दिउँसो खाजा खुवाउने प्रवन्ध पनि गराईवक्सियो जनकपुरमा रेल नेपालमा जुद्ध सडक ट्रलि त्रिपुरेश्वरमा

श्री ५ को इष्टाच्यू त्यहाँ देखि व्रिटिश लिगेसेनसम्म पीचरोड फुटपाथ विराटनगर सडक र नेपालगञ्जको सडक ठाउँ ठाउँका सडकहरु र पचलीघाटको देशी फलामेपूल कोटेश्वरमा ऐ पूल मोरङ सोवातीको पूल र अरू ठाउँ ठाउँका पुलहरू धेरै बनाई बक्सियो ।

कीर्तिपुरको धारा, खोकना बुङ्गमतीको धारा, इलामको धारा, नेपालगञ्जको धारा, विराटनगरको धारा, विरगञ्जको धारा, टोखाको धारा, इनार, टिउववेल र पोखरीहरू धेरै बनाइ बक्सियो ।

भुकम्पले नष्ट भएका स्थान अखडा मठ मन्दिर पाटी पौवा सत्तल घाट धर्मशालाहरु र धरहरा घण्टाघर समेत जीर्णोद्धार गरी बक्सियो ।

वेलायतमा नेपाल लिगेसन दिल्लीको नेपाल हाउस ल्हासाका वकिल बस्ने घर भीमफेदीका व्यारेक, वानेश्वरको व्यारेक छाउनीको कलाशाला व्याङ्कघर, झ्लेलखाना घरहरा टक्सार ज्यावलाखेलमा चिडियाखानाका त्रिपुर ललितपुर सहरमा ढल साईड ड्रेन जुद्ध नगर बजार मधेश जिल्लाहरूमा वडा हाकिम बस्ने घर अड्डा कचहरी सरकारिया घरहरू धेरै बनाई बक्सियो ।

विरगञ्ज देखि पूर्व विराटनगर धरान धनकुटासम्म नयाँ टेलिफोनको लाइन शहरमा अटोम्याटिक टेलिफोन रह्यो । हस्पिटल विभागमा ठाउँ ठाउँका हस्पिटलमा बेडहरु थप गराई बक्सियो ।

आगलागीको बचाउ निमित्त नेपाल तिनै शहरमा पूरा सामान सहितको जुद्ध वारूणयन्त्र राखिबक्सियो ।

पहाड तर्फ पोखराको पार्थिबाँध सप्तरीका वीर बाँध र कूलो पाइप ठाउँ ठाउँमा धेरै बनाई बक्सियो ।

जङ्गी तर्फ पाश्ववती नयाँ पल्टन खडा भयो मिलिसियालाई थप भयो । नेपालमा बन्दुकका तोप बनाउने कल सामान झिकाई हातहतियार खजाना नेपाल मै तयार हुने गराइबक्सियो ।

३. नगद लाग्ने..........मा............छाउनीमा कला भवन खोली वक्सेकोले सर्वसाधारण जनताले त्यहाँ गई दिल बहलाउने र शिक्षा हा
सिल गर्न पाउने गराई बक्सियो ---------- ---- १३

जागिरदारहरू धेरै जसोलाई जागीर छुटे पछि के खानु के लाउनु भन्नु परेमा श्री ३ महाराजवाट जङ्गी निजामति सवै जागीरदारहरुलाई द्रव्यको सर पेन्सनको प्रथा चलाई वक्सियो ------------ १४
श्री ३ महाराजवाट व्रिटिश र हिन्दु स्थान सरकारसंग रहेको पुरानो दोस्तान कायम राख्नालाई केहि कुराको पनि कसर राखि वक्सेको थिएन मौसुफ कै साशनकालमा विलायतमा लिगेसन खोली वक्सि चिठीमा नेपाली टिकटले भर हिन्दुस्थान चल्ने भयो । द्वितीय भयङ्कर महासमर खुलेपछि हिन्दुस्थानको वचावटको लागि आफनु फौज हिन्दुस्थान पठाई हाम्रो दोस्त व्रिटिश सरकारलाई मद्दत बक्सियो । त्यसको फलस्वरूप हिन्दुस्थान सरकारले नेपाल सरकारलाई सो सहायताको बदला रूपमा के रू. २॥ करोड दिनु भयो यो सवै वहाँ कै अकलवाट भएकै हो वहाँ कै सासन कालमा भूकम्प उद्धार माफी मिनाहा विजुली उत्पादन पूल सडक इमारत उद्योग कल कारखाना

४. खाना शिक्षा इत्यादिमा सालवसाली र पटके खर्च समेत गरी ज्मा २॥ करोड रूपैया खर्च गरिवक्सियो - १५ श्री ३ महाराजको वुद्धि र गुणको प्रमान देश देशान्तरमा पर्न गएको कुरा विलायेत, फ्रान्स, वेल्जीयम, नेदरल्याण्ड, इटली, जर्मनी र चीनका सरकारहरुवाट वहाँलाई आएका इज्जत र तक्माहरुले जनाई रहेछन् । मौसुफको देसाटन भित्र विलायेत, फ्रान्स इत्यादि युरोपका मुलुकहरु पनि परेका छन् । १६ - यो प्रतिमाको उद्घाटन २००५ साल जेष्ठ ३१ गते रोज १ का दिन श्री महाराज मोहन शमशेर जङ्गबहादुर राणावाट भयेको हो - १७ यो सवै प्रवन्ध

मिलाई शिलापत्र लेखाई जडान गर्न लाउने भए कनिष्ट पुत्र श्री लेज नारायण शमशेर जङ्ग वहादुर राणा
इति सम्वत् २००६ साल मार्ग रोज शुभम् ।

श्री ५ पृथ्वी वीर विक्रम शाहदेवको शालिकको अभिलेख
स्वस्ति श्री गिरिराज चक्र चुडामणी नर नारायणेत्यादि विविध विरुदावलि विराजमान मान्नोन्नत श्री मन्महाराजाधिराज श्री श्री श्री महाराज पृथ्वी वीर विक्रम जङ्ग वहा दुर शाह वहादुर शम्शेर जङ्ग देवाना सदा समर विजयीनाम
विक्रम सम्वत् १९३२ शाके १७९७ श्रावण शुक्ल सप्तमी श्रावण २५ रविवारको जन्म
सम्वत् १९६८ शाके १८३३ पौष शुक्ल षष्टी मार्ग २५ गते रविवार मा मुक्त
सम्वत् १९८६ शाके १८५१ **फाल्गुन** २ गते सोमवार सालिक स्थापना भएको
HIS MAJESTY MAHARAJA DHIRAJ
PRITHIVI BIR BIKRAM JUNG BAHADUR
SHAH BAHADUR SHUMSHERE JUNG
BORN 8th AUGUST 1875 A.D.
DIED 11th DECEMBER 1911 A.D.
STATUE UNVEILED ON 3rd MARCH 1938 A.D.

वीर शमशेर (इ.सं. १८५२-१९०१)

श्री ३ चन्द्र शमशेर (इ.सं. १८६३-१९२९)

# त्रिपुरेश्वर महादेव मन्दिर जीर्णोद्धार कार्य एक विवेचना

– शोभा श्रेष्ठ

## भूमिका

काठमाडौं उपत्यकाभित्र रहेका अनगिन्ति मठ मन्दिर, पाटीपौवा, देवालय, शिवालय, ढुङ्गेधारा तथा पोखरीहरू हाम्रो अमूल्य सम्पत्ति हुन् । यिनै अनगिन्ति सम्पदालाई देखेर उन्नाइसौं शताब्दीको पूर्वाद्धमा नेपाल आएका ब्रिटिश विद्वान् कार्कपेट्रिकले यसरी आफ्नो भाव व्यक्त गरेका थिए "There are nearly as many temples as houses and as many idols as inhabitants" यिनै सम्पदाहरूको अवलोकन गर्न विदेशी विद्वान् तथा पर्यटकहरू नेपाल आउने गरेको हो । तर अहिले शहरीकरणतर्फ उन्मुख हाम्रो समाज परम्परागत धर्म संस्कृति तथा सम्पदा जगेर्ना गर्नेतर्फ आवश्यकता अनुसार सक्रिय भएको पाईदैन । हाम्रा यी सम्पदाहरू विनास भएमा हाम्रो अस्तित्व पनि हराउने सम्भावना तर्फ हामीले ध्यान पुऱ्याएका छैनौं । अत: हामीले हाम्रा यी अमूल्य सम्पदालाई संरक्षण गर्न सबै निकायहरू सक्रिय हुनु आवश्यक छ ।

## परिचय

धेरै दिनसम्म ओझेलमा परेको टेकु थापाथली परिसरमा अहिले सम्बन्धित निकायहरूको ध्यान पुगेको देखिन्छ । पहिलो पटक सन् १९९४ मा टेकु थापाथली रिसर्च ग्रुप, जोन साण्डे कन्सल्ट्यान्ट र पुरातत्त्व विभागको संयुक्त प्रयासबाट टेकुदेखि थापाथलीसम्मका स्मारकहरूको संरक्षण र पुनर्स्थापना गर्ने उद्देश्यले अध्ययन गरी प्रतिवेदन तयार गरिएको थियो । उक्त स्थलहरूमा रहेका स्मारकहरूको संरक्षण गर्न आर्थिक स्रोतको लागि जोन साण्डे कन्सल्ट्यान्टबाट प्रयास भइरहेको बेलामा संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयको ध्यान त्यस क्षेत्रमा पुगेको हो । यसै सयममा प्रसिद्ध त्रिपुरेश्वर महादेव मन्दिरको तल्लो छाना भत्कन गएकोले त्यही मन्दिरबाट जीर्णोद्धार कार्य शुरु गरिएको र अहिलेसम्म अन्य विभिन्न स्मारकहरूको जीर्णोद्धार कार्य गर्न संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयबाट बजेट व्यवस्था भई यस विभागका प्राविधिकहरूको पूर्ण जिम्मेवारीमा जीर्णोद्धार कार्य सम्पन्न भएको छ । तर यहाँ त्रिपुरेश्वर महादेव मन्दिरको जीर्णोद्धार कार्य बारे मात्र विवेचना गरिने छ ।

काठमाडौं महानगरपालिका वडा नं. ११ बागमती नदीको किनारमा परम्परागत नेपाली छत्र शैलीमा निर्माण यो मन्दिर अवस्थित छ । श्री ५ रणबहादुर शाहको हत्या गरी मृत्यु भए पछि उहाँको कान्छी महारानी ललितत्रिपुरा सुन्दरीले आफ्नो पतिको मोक्षका लागि नाती श्री ५ राजेन्द्र विक्रम

शाहको समयमा यो मन्दिरको निर्माण गरेकी हुन् । यस मन्दिरको शिलान्यास वि.सं १८७४ आषाढ शुक्ल नवमी सोमवारको दिन भएको र वि.सं १८७५ वैशाख कृष्ण तृतिया वृहस्पतीवारका दिन सम्पन्न गरी निराकार शिवलिङ्गको प्रतिस्थापना गरी कार्य सम्पन्न गरिएको थियो । उक्त मन्दिरको मार्ग कृष्ण पञ्चमी बुधवारको दिन देवालयको प्रतिष्ठा गरी घण्ट चढाइयो । उक्त मन्दिर निर्माण गर्न आवश्यक सरसामानको व्यवस्था गर्ने जिम्मा भीमसेन थापा र रंगनाथ पाण्डेको रहेको थियो । यो मन्दिर शिव पाञ्चायन पद्धतीमा निर्माण गरिएको हुनाले मूख्य मन्दिरको चार कुनामा स-साना देवल बनाई क्रमश: विष्णु, सूर्य, गणेश तथा भगवतीको मूर्तिहरू स्थापना गरिएका छन् । मन्दिर परिसर अझ भव्य हुने गरी चारैतिर विभिन्न देवदेवीको मूर्तिहरू स्थापना गरिएका छन् । उक्त मन्दिरको निर्माण कार्य वि.सं १८७५ मा नै सम्पन्न भए पनि १८७९ मा मात्र माझको छानामा सुन जलप लगाउने कार्य गरिएको थियो । वि.सं. १८७५ मा मन्दिर निर्माण कार्य सम्पन्न भईसके पछि १८७७ मा मन्दिरको चारैतिर चौघेरा सत्तलको निर्माण भएको थियो ।

ललितत्रिपुरा सुन्दरीबाट निर्माण भएको शिव मन्दिर भएकोले सो मन्दिरको नाउँ त्रिपुरेश्वर महादेव र त्यसैबाट सो ठाउँको नाउँ त्रिपुरेश्वर रहन गएको राय इतिहासकारहरूको छ । महारानी ललितत्रिपुरा सुन्दरीले उक्त मन्दिरमा नित्य पूजा गर्न सरसफाई गर्ने, पुजारी, भण्डारी, सुसारे, कुसले, नगर्ची आदिको खर्चको लागि ८७० रोपनी गुठी जग्गा राखेको र मन्दिर परिसर मात्र पनि ५४ रोपनी क्षेत्रमा फैलिएको उल्लेख पाइन्छ । तर अहिले भएको अतिक्रमणबाट मन्दिर परिसर एकदम साँघुरिएको छ । १८७४ मा शिलान्यास भई सो मन्दिर तथा अन्य कच्चा देवलको निर्माण, विभिन्न मूर्तिहरूको प्रतिस्थापना, चौघेरा सत्तलको निर्माण, बागमती घाट जाने सिँढी निर्माण कार्य क्रमिक रूपमा भएको देखिन्छ । साथै उक्त कार्यहरू गरिसकेर १८८८ मा महारानीको मृत्यु भए पश्चात् श्री ५ राजेन्द्रबाट १८९४ मा महारानीको सुनौला सालिक सहित शिलास्तम्भ स्थापित गरिए पछि त्यस परिसरमा भए गरेका निर्माण कार्य सम्पन्न भएको अनुमान हुन्छ । श्री ५ राजेन्द्रबाट मन्दिर प्राङ्गणमा महारानीको सालिक सहित शिलास्तम्भ राखी मन्दिरमा नियमित रूपमा भजनकिर्तन गर्नका लागि थप २५ रोपनी जग्गा गुठी राखिदिएका थिए । राजगुठीबाट सञ्चालित उक्त व्यवस्था हाल गुठी संस्थान अन्तर्गत रहन गएको र अहिले उक्त जग्गा कहाँ कुन अवस्थामा रहेको छ भन्ने यकीन तथ्याङ्क गुठीबाट प्राप्त हुन सकेको छैन ।

## जीर्णोद्धार पृष्ठभूमि

वि.सं. १८७५ मा निर्माण भएको यो मन्दिर १९९० सालको महाभूकम्पबाट भत्केकोले वि.सं १९९३ मा जीर्णोद्धार गरिएको थियो । त्यसपछि स्व. श्री ५ महेन्द्रको समयमा २०१५ सालमा पुन: जीर्णोद्धार कार्य भएको थियो । त्यसपछि आ.व. २०५७/५८ मा विस्तृत रूपमा मन्दिरको जीर्णोद्धार कार्य सम्पन्न गरिएको छ । २०५५ सालको वर्षात्‌बाट उक्त मन्दिरको सबैभन्दा तल्लो छानाको पूर्वतर्फको सम्पूर्ण छाना उत्तर र दक्षिणतर्फको आधा भाग भत्केको थियो । त्यसले गर्दा कतिपय काष्ठकलाका काठहरू पनि क्षति भएको थियो । यसरी राजगुठी अन्तर्गत पर्ने र अहिले गुठी संस्थानको स्वामित्वमा रहेको सो मन्दिर र त्यसको चारैतिर रहेको सत्तल जीर्ण भई जीर्णोद्धार गर्नुपर्ने अवस्थामा रहेको र गुठी संस्थानबाट सो कार्य गर्न आवश्यक बजेट व्यवस्था गर्न नसक्ने भएर होला गुठी संस्थान र काठमाडौं महानगरपालिका मिलेर मन्दिर तथा सत्तलको जीर्णोद्धार गर्ने गरी ०५५।११।३ मा सम्झौता भएको थियो । सम्झौता अनुसार का.म.न.पा.ले कुल लागतको ८५% र गुठी संस्थानले १५% रकम खर्च गर्ने व्यवस्था भएको थियो । साथै मन्दिरको पूजा पर्व सञ्चालन गर्न का.म.न.पा. ले एकमुष्ट सात लाख गुठी संस्थानलाई उपलब्ध गराउने पनि सम्झौतामा उल्लेख भएको थियो । तर ०५५।११।३ मा सम्झौता भए पनि के-कति कारणले हो सो मन्दिरको जीर्णोद्धार हुन नसकी मन्दिरको अवस्था दिन प्रतिदिन जीर्ण हुँदै गएको र यथाशीघ्र जीर्णोद्धार गर्नुपर्ने भए तापनि गुठी संस्थानबाट आवश्यक बजेट व्यवस्था हुन नसक्ने भनेको कारण त्यसै राख्नु पनी उपयुक्त नभएकाले के-कसरी

जीर्णोद्धार कार्य गर्ने भन्ने सम्बन्धमा विभागमा छलफल भइरहेको अवस्थामा स्थानीय जनता, पूजारीहरू र त्रिपुरेश्वर महादेव सरोकार समितिले संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयमा जीर्णोद्धार गर्न निवेदन पेश गरेको थियो । स्थलगत निरीक्षणपछि मन्त्रालयबाट पनि तुरून्त जीर्णोद्धार कार्य गर्नुपर्ने महसूस गरी आ.व. ०५७/५८ मा बजेट व्यवस्था गरी दिएकोले यस विभागको प्राविधिकहरूबाट जीर्णोद्धार कार्य शुरू गरी आ.व. ०५८/५९ मा मन्दिरको जीर्णोद्धार कार्य सम्पन्न गरिएको थियो ।

## जीर्णोद्धार कार्य-

संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयबाट बजेट व्यवस्था भई जीर्णोद्धार गर्न विभागको प्राविधिकहरूलाई सम्पूर्ण जिम्मेवारी साथ खटाइएको थियो । जीर्णोद्धार कार्य शुरू गर्नु अगाडि आवश्यक फोटो लगत पुरातात्विक प्रतिवेदन र लगत इष्टिमेट तयार गरी कार्य शुरू गरिएको थियो । खासगरि मन्दिरको छानाहरू नै जीर्ण भई त्यहाँबाट पानी चुहिएकोले गाऱ्होहरू समेतलाई प्रतिकूल असर पारेको र तल्लो छानाको धेरै भाग भत्कीसकेको हुनाले पहिले त्यही छाना बनाउने कार्य शुरू गरी आवश्यक मूसि, चलु र बुट्टेदार टुँडालहरू बनाउने कार्यको साथै छानाको बाँकी रहेको भागहरू पनि पूर्णरूपमा खोली सम्पूर्ण नयाँ मूसि फलेकहरू लगाउने कार्य गरिएको थियो । उक्त छानामा झिंगटि लगाउने अवस्थामा आएर त्रिपुरेश्वर महादेव सरोकार समितिले तात्कालिन संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्री श्री ओमकार श्रेष्ठज्यूमा तल्लो छानामा पनि माथिको दुई छानामा जस्तै तामा पाताको सुन मोलम्बा छाना लगाई दिन निवेदन दिएको थियो । मा. मन्त्रीज्यूबाट सुन मोलम्वा तामा पाताको छाना लगाइ दिन सकिने नसकिने बारेमा छलफल गर्दा तल्लो छाना साविक झिंगटी नै लगाउनु पर्ने त्यहाँ सुन मोलम्वा छाना भएको केही उल्लेख नभेटिएको र प्रमाण विना फेरबदल गर्न नमिल्ने कुरा अवगत गराएका थियौं । जीर्णोद्धारको क्रममा संशोधन गर्न नमिल्ने र नहुने होइन तर त्यसको लागि प्रमाणहरू आवश्यक हुन्छ नै । साथै सुन मोलम्वा छाना लगाउँदा विनियोजितभन्दा धेरै बढी रकम लाग्ने भएको व्यहोरा पनि जानकारी गराइएको थियौं । माग अनुसार सुन मोलम्वा तामा पाताको छाना लगाउँदा थप रकम रू. १,२४,२२,२४७ र सुन मोलम्वा नगरी तामा पाता मात्र लगाउँदा रकम रू. १७,७३,३०२ लाग्ने अनुरोध गरेका थियौं । उक्त मन्दिरको तल्लो छानामा तामापाता लगाई सुन मोलम्वा गरेको उल्लेख कतै पाइएको छैन । बरू माझको छानामा तामापाता लगाई सुन मोलम्वा लगाइएको कुरा सुन्दरानन्द बाँडाले सो समयमा लेखेको त्रिरत्न सौन्दर्य गाथामा पनि माझको छानामा सुन मोलम्वा लगाएको उल्लेख यसरी गरेका छन् "श्री वडामहारानीबाट त्रिपुरेश्वर महादेवका देवालयको माझ छानामा तावाको छाना वनाई पातामा राग लगाई नागोल गोगल कुंधाल कुंपा चरा दिग पातक ह्मुतल गैन्हमा सुनले जलप सारी चह्राउनु भएको मिति १८७९ फागुन सुदि ५ रोज १" साथै झिंगटी राख्ने हिसाबमा छानाको स्लोप मिलाई मूसिहरू राख्ने काम गरी फलेक ठोक्ने काम पनि प्राय: पूरा भइसकेको अवस्थामा तामा पाता लगाउँदा पूरै संरचना नै बिगारी बनाउनु पर्ने प्राविधिक कठिनाई पनि मा. मन्त्रीज्यूमा अवगत गराइए पछि मन्त्रालयको मिति ०५८/३/२० को निर्णयानुसार झिंगटीको छाना नै राख्ने गरी छाना छाउने कार्य पूरा गरिएको हो । यो छानाको भारवहन गरेका टुँडालहरू पनि कुनै छाना भत्कँदा टुटफूट भएका र कुनै जीर्ण भई प्रयोग हुन नसकेकोले आठवटा नयाँ टुँडालहरू पुरानै नाप साइज र बुट्टा अनुसार बनाई प्रयोग गरिएको छ ।

मन्दिरको बीचको छाना धेरै नबिग्रेको कारण सरसफाई गरी खुकुलो भएको किल्लाहरू र पाताहरू मिलाउने कार्य गरिएको थियो । सबैभन्दा माथिको छाना र गजूरबाट पानी चुहिने भएकोले छाना र गजूरलाई आवश्यक काठहरू फेरी पानी नचुहिने किसिमबाट पूर्णरूपमा बनाइएको छ । यसको अलावा गाह्रो, कार्नेस, पेटीहरूको मर्मत गरिएको थियो । छानाहरूमा राखिएको wind bell हरू पनि कति हराएका हुनाले नयाँ बनाई पुरानोलाई समेत सफा गरी लगाउने कार्य पनि गरिएको थियो ।

जीर्णोद्धारको क्रममा आवश्यक भागहरूमा रसायन संरक्षणको कार्य पनि गरिएको थियो । खासगरि पून: प्रयोग

हुने टुँडाल, आँखिझ्याल आदिमा रसायन संरक्षण गरी Consolidate गरिएको थियो । सुन मोलम्वा छाना गजूर र तोरणहरूमा खिया लागेको सफा गरी Preservative Coating लगाउने कार्य समेत गरिएको थियो । मूख्य मन्दिरको जीर्णोद्धारसंगै मन्दिरको चार कुनामा रहेका कच्चा देवलको जीर्णोद्धार, पेटी मर्मत, प्राङ्गण व्यवस्थित गर्ने कार्य पनि गरिएको थियो । आ.व. ०५७/०५८ मा शुरू गरी ०५८/०५९ मा जीर्णोद्धार कार्य सम्पन्न गरिएको त्रिपुरेश्वर महादेव मन्दिरमा जम्मा तीस लाख जति रकम लागेको छ ।

**अन्तमा–**

मन्दिरको जीर्णोद्धार कार्य गर्न खटिएका यस विभागका प्राविधिकहरूमा पुरातत्त्वविद् श्री हिरण्यश्वरानन्द वैद्य, ओ.सी.हरू गोपाल झा, संजीव श्रेष्ठ र फोटोग्राफर ओम श्रेष्ठको कामको लागि उहाँहरू धन्यवादका पात्र हुनुहुन्छ भने बजेट व्यवस्था गरी पहिलोपटक टेकू थापाथली क्षेत्रमा जीर्णोद्धार कार्य गर्ने अवसर यस विभागलाई दिएकोमा संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयप्रति आभार व्यक्त गर्न चाहन्छु ।

मन्दिरको कार्य सम्पन्न भए पनि चारैतिर रहेका सत्तलहरू तथा परिसर बनाउने कार्य बाँकी नै छ । उक्त सत्तलहरूको संरक्षण तथा पुनर्स्थापना के-कसरी गर्ने भन्ने वारेमा पुरातत्त्व विभागले एउटा कार्य योजना तयार गरी आवश्यक कारवाहीको लागि संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयमा पेश गरेको छ । उक्त चौघेरा सत्तलको संरक्षण गर्न करीब चार करोड रकम लाग्ने र चार वर्षको समयावधि लाग्ने अनुमान छ । यदि सो सत्तलहरू जीर्णोद्धार गरी महारानी ललितत्रिपुरा सुन्दरीले जुन प्रयोजनको लागि बनाएका थिए त्यही प्रयोजनका लागि हामीले पनि उपयोग गर्न सकेमा मात्र हाम्रो उद्देश्य पूरा हुनेछ । अन्यथा मन्दिर मात्र जीर्णोद्धार गरी चारैतिरको सत्तललाई त्यसै विभत्स रूपमा राखिराख्ने हो भने त्यसको कुनै औचित्य रहने छैन । यसमा स्थानीय निकाय, गुठी संस्थान, संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय र पुरातत्त्व विभाग लगायत अन्य सबै निकायहरू सक्रिय हुनु अति आवश्यक छ ।

त्रिपुरेश्वर महादेव मन्दिर जीर्णोद्धार पूर्व

# लिच्छविकालीन लोकपालस्वामी शैवदेवता हुन्

**– भरतमणि जङ्गम**

अभिलेख संग्रह पहिलो भागमा प्रकाशित लिच्छविकालीन राजा नरेन्द्रदेवको अनन्तलिङ्गेश्वरको अभिलेखमा "लोकपालस्वामी" उल्लेख भएको छ । लोकपालस्वामीका बारेमा विभिन्न मत मतान्तर हुँदाहुँदै पनि सो अभिलेखमा उल्लेख भएको लोकपालस्वामीलाई इतिहासविद् धनवज्र वज्राचार्य र डा. जगदीशचन्द्र रेग्मी लगायत केही विद्वान् तथा अन्वेषकहरूले लोकपालस्वामी वैष्णवदेवता हुन् भनेर किटान साथ भनिएका छन् । यस बारेमा प्रकाश पार्नु उचित सम्झि यो लेख लेख्ने जमर्को गरेको हुँ ।

भक्तपुर जिल्लाको दक्षिण भागमा रहेको गुण्डुगाउँको नैऋत्यकोणमा पूर्व फर्केको डाँडोको बीच भागमा अनन्तलिङ्गेश्वर महादेवको मन्दिर छ । यो मन्दिर एकान्त स्थानमा बीच जङ्गलमा छ । मन्दिरको बनोटलाई मात्र विचार गर्दा गुम्बज शैलीमा निर्मित सो मन्दिर नयाँ जस्तो प्रतीत हुन्छ तर पनि यो मन्दिर नयाँ भने होइन । यो मन्दिर लिच्छविकालीन मन्दिर हो र त्यस समयमा अत्यन्तै प्रख्यात र लोकप्रिय थियो भन्ने कुरा त्यहाँ भएको अभिलेखले उल्लेख गरेको पाइन्छ र कालान्तरमा यसको अस्तित्व निस्तेज हुँदै गएको पनि अनुमान गर्न सकिन्छ । यस मन्दिरमा प्रयोग भएका सामग्री काठपात र खम्बाहरूलाई हेर्दा साथै मन्दिर परिसरलाई नियाल्दा मन्दिरको निर्माण प्राचीनकालमा नै भएको दृष्टिगोचर हुन्छ । केही दशक अघिसम्म मन्दिरको उत्तरतर्फ एउटा भव्य भवन थियो जहाँ त्यस मन्दिरमा पूजा गर्ने पुजारीहरू बसोबास गर्दथे हाल त्यो भवनको जगमात्र देख्न सकिन्छ । भनिन्छ, विक्रम संवत् १९९० मा आएको महाभूकम्पबाट प्राचीन मन्दिर भत्किएको र पछि त्यस मन्दिरलाई गुम्बज शैलीमा बनाएको हो ।[1] हाल त्यस शिवालयको परिसरमा कञ्चन पानी भएको कुँवा, पुरिएको अवस्थामा एउटा इनार र सानो पानीको कुण्ड छन् । स-साना शिवलिङ्गहरू वरपर छरिएर रहेका छन् भने गणेश, सरस्वति तथा नारायणका मूर्तिहरू भित्तामा टाँसिएका छन् । काठमाडौं हनुमानढोका नजिकै रहेको कालभैरवको दुरूस्त आकृति भएको तर सानो मूर्ति पनि शिवालय परिसरको एक कुनामा रहेको छ । त्यस महादेवस्थानमा जान तीन तर्फबाट ढुङ्गाले छापेको बाटो भएपनि कालपरिस्थिति र समय-समयमा जिर्णोद्धार नभएको कारणले गर्दा ती ढुङ्गाका खुड्कीलाहरू अव्यवस्थित छन् । तर पूर्वतर्फको ढुङ्गाको सिँढी

---

१. मन्दिरका पुजारी नवराज जङ्गम र गाउँका जानकार व्यक्तिहरू ।

भने अहिलेसम्म पनि तल खोलादेखिको लामो उकालो बाटो भने ठिकै अवस्थामा भएको देखिन्छ ।

अनन्तलिङ्गेश्वर महादेवस्थान जाने पूर्वतर्फको ढुङ्गाको सिँढी समाप्त हुने वित्तिकै दुवैतर्फ माटोमा गाडिएको अवस्थामा दुइटा शिलापत्र देखिन्छन् । एउटा शिलापत्र नकुँदिएको अवस्थामा देखिन्छ भने अर्को दक्षिणतर्फको शिलापत्रमा लिच्छवीकालीन अक्षर अङ्कित अभिलेख देखिन्छ । तर त्यस अभिलेखको धेरै अक्षर साबुत छैनन् र पानी र माटोले खाएर बढो मुश्किलले मात्र पाठ गर्न सकिने अवस्थामा देखिन्छन् । त्यो अभिलेखलाई संशोधन मण्डलले पहिलोपल्ट "अभिलेख-संग्रह" पहिलो भागमा प्रकाशित गरेर सार्वजनिक गरेको थियो ।[२]

अनन्तलिङ्गेश्वरको अभिलेखमा लोकपालस्वामीको उल्लेख भएको छ । लिच्छविकालीन प्रभावशाली राजा नरेन्द्रदेवको सो अभिलेखमा लोकपालस्वामी उल्लेख भएकोमा इतिहासविद् धनवज्र वज्राचार्यले लोकपालस्वामी वैष्णवदेवता हुन् भनेर किटान साथ भनेका छन्,[३] जो यथार्थमा लोकपालस्वामी शैवदेवता हुन् र त्यस अभिलेखमा उल्लेखित लोकपालस्वामी अनन्तलिङ्गेश्वर नै हुन् भन्ने निम्न प्रमाण र आधारले प्रमाणित गर्न सकिन्छ ।

१. अनन्तलिङ्गेश्वर शैवदेवता हुन् । "अनन्तलिङ्ग" अर्थात् शिवलिङ्ग स्थापित मन्दिरको परिसरमा अभिलेख छ । सो अभिलेख जहाँ खडा भएर रहेको छ सो स्थानको मूल देवता वैष्णवदेवता नभएर शैवदेवता भएको स्पष्ट छ ।
२. स्थापित अभिलेखको शिरोभागमा साँढे अङ्कित छ जो शिवका वहान अर्थात् शिव स्वरूपलाई स्थापित गर्न संकेत गरिएको हो ।
३. अभिलेख स्थापना गर्ने राजा नरेन्द्रदेव व्यक्तिगत रूपमा शिव उपासक शैवमतका राजा थिए भन्नेमा कुनै विवाद छैन । "परममाहेश्वर" उपाधि धारण गर्ने पहिलो राजाका रूपमा परिचित लिच्छविकालका राजा नरेन्द्रदेवले धेरै शिवालयहरूमा यस्ता अभिलेखहरू स्थापित गरेका छन् ।[४] शैवमतमा विशेष आस्था भएका राजाले स्थापित अभिलेखमा उल्लेख गरेको लोकपालस्वामी अर्थात् लोकका मालिक शिव मात्र हुनसक्छन् वैष्णवदेवता हुनसक्दैनन् ।
४. त्यसबखत माहेश्वर र वीरशैव सम्प्रदायका बीच पारस्परिक सम्बन्ध थियो भन्ने बारेमा धेरै प्रमाणहरू फेला परेका छन् ।[५] अनन्तलिङ्गेश्वर शिवालयका पुजारी वीरशैव मतका जङ्गमहरू हुन् र सो मन्दिर भक्तपुर तौमढी टोलस्थित जङ्गममठबाट सञ्चालित छ । जङ्गममठमा मठाधिशलाई मल्लकालमा

---

२. धनवज्र वज्राचार्य- लिच्छविकालका अभिलेख संख्या १२९ पृष्ठ ४८५ ।

३. धनवज्र वज्राचार्य, लिच्छविकालका अभिलेख, पृष्ठ ४८९ मा यसरी भनिएको छ– "त्यसताका वैष्णव देवतालाई "स्वामी" भन्ने चलन थियो । अंशुवर्माको हाँडिगाउँको अभिलेखमा चाँगुनारायणलाई "दोलाशिखरस्वामी" भनिएको छ । केवलपुरको अभिलेखमा (इचंगुनारायणलाई) नारायणस्वामी भनिएको छ । साँखु दुगाहिटीको अभिलेखमा वामनस्वामीको उल्लेख भएको छ । यस आधार मा विचार गर्दा त्यहाँ उल्लेखित लोकपालस्वामी वैष्णवदेवता हुन् भन्ने निश्चित् हुन्छ ।

४. धनवज्र वज्राचार्य, लिच्छविकालका अभिलेख, वज्रघरको नरेन्द्रदेवको अभिलेख, संख्या १३४ पृष्ठ ४९९ ।

५. डा. पुरुषोत्तमलोचन श्रेष्ठ, खोपृङ, वर्ष-८, २०५६ पृष्ठ ३ मा यसरी भनिएको छ- "लिच्छविकालमा विशेषगरी नरेन्द्रदेवको पालामा माहेश्वर सम्प्रदाय निकै लोकप्रिय रहेको बुझिन्छ । यस अभिलेखमा पनि ललितमाहेश्वरको उल्लेख भएकोले त्यसताका भक्तपुरमा त्यस सम्प्रदायका अनुयायीहरू थिए भन्ने कुरा थाहा हुन्छ । "लडितमहेश्वर" को उल्लेख देउपाटनको अंशुवर्माको अभिलेखमा आइसकेको छ सो अभिलेखमा उनकी भाञ्जी भाग्यदेवीले लडितमहेश्वर स्थापना गरेको कुरा परेको छ । यस सम्प्रदायका अनुयायीहरू पनि वीरशैवहरू झैं शिवलाई पञ्चतत्त्वका प्रतिपादक मान्दछन् ।

"रावल"को उपाधिले पुकारिन्थ्यो[६] भने लिच्छविकालमा "कुलपति" भन्ने उपाधिले सम्मानित गरिएको थियो । उक्त नरेन्द्रदेवको अभिलेखमा पनि कुलपति उल्लेख भएको छ । अभिलेखमा त्यसबखतको आम्दानी खर्चको बाँडफाँड गरी सो खर्च कुलपतिले गर्नुपर्ने व्यहोरा उल्लेख भएका छन् ।[७] यसबाट स्पष्ट हुन्छ कि लिच्छविकालका राजा नरेन्द्रदेवका पालामा नेपालमा वीरशैव मत लोकप्रिय थियो र त्यसैको बाहुल्यता थियो भन्ने पनि देखिन्छ ।

५. अनन्तलिङ्गेश्वरको अभिलेख भनेर चिनिने उक्त शिलालेख स्थानान्तरण भएर त्यहाँ रहेको भन्ने कुरा संशोधन मण्डलले भन्न सकेको छैन र अभिलेख संग्रहमा पहिलोपटक अभिलेख छापिंदा पनि त्यस्तो कुनै स्थानान्तरण भएको कुरा उल्लेख भएको छैन त्यसैले सो माथि उल्लेखित लिच्छवि राजा नरेन्द्रदेवको अभिलेख प्राचीनकालदेखि नै त्यहीं नै थियो भन्ने कुरा पनि माथिका प्रमाणले पुष्टि गरेको छ । त्यसैले यो स्थानान्तरण भएको नभई त्यसै स्थानमा स्थापित भएको हो भनी यकिनकासाथ भन्न सकिन्छ । शिलालेख रहेको मूलस्थान शैवक्षेत्र हो ।

६. यस अभिलेखलाई परिचय गराउने सिलसिलामा नेपालको प्राचीन अभिलेखमा लोकपालस्वामी शैवदेवता हुन् भनेर अनेक उदाहरण दिएर व्याख्या गरिएको छ ।[८]

उपरोक्त कथनानुसार धनवज्र वज्राचार्यको लिच्छविकालको अभिलेखको पृष्ठ ४८५ देखि ४८९ सम्म लोकपालस्वामीलाई वैष्णवदेवता भनी गरिएको व्याख्या गलत देखिन आएको छ । इतिहासको तथ्यलाई राम्ररी नकेलाई अथवा प्रत्यक्ष अभिलेख रहेको स्थानको भ्रमण नै नगरी कोठामा बसेर अनुमान वा व्याख्या गर्दा इतिहासको वास्तविक तथ्य छायाँमा पर्न जान्छ भन्ने कुरा उपरोक्त कथनले सावित गरेको छ । लोकपालस्वामी वैष्णवदेवता हुन् भन्ने इतिहासविद्हरूको भनाइले गर्दा प्राचीन इतिहासका धेरै तथ्यहरू अझै पनि प्रष्ट हुन सकेका छैनन् ।

लोकपालको अर्थ हो लोकको रक्षा गर्ने र स्वामीको अर्थ हो मालिक अर्थात् लोकलाई पालन गर्ने मालिक । शब्दकोषले स्वामीको अर्थ 'नायक', 'इश्वर', 'प्रभु', 'पति' र 'मालिक' भनेर व्याख्या गरेको छ । हुन पनि "स्वामी" आदर र अभिभावक सूचक साझा शब्द हो । वैष्णव र शैव सम्प्रदायका नायकहरूलाई स्वामी घोषित गर्ने प्रचलन सनातनदेखि नै चलि आएको छ । त्यसैले लोकपालस्वामी वैष्णवदेवता हुन् भनी किटान गर्दा चाँगुनारायण "दोलाशिखरस्वामी" भनी नामाकरण हुनपुगेका छन् । "दोलाशिखरस्वामी" -यो छुट्टै अनुसन्धानको विषय हो । यदि स्वामी शब्दले वैष्णवदेवता जनाउँदैन भने दोलाशिखरस्वामीमा पनि प्रश्न लाग्न सक्छ किनभने स्पष्ट चाँगुनारायणलाई दोलाशिखरस्वामी भनिएको छ।[९] प्राचीन इतिहासमा रहेको

---

६. भरतमणि जङ्गम, "अंशुवर्माको राजधानी शहर-हंसगृह", रोलम्बा, भोलुम २० नं. १-२ पृष्ठ १२६ मा यसरी लेखिएको छ- खर्चको बाँडफाँड गर्दा कुलपतिका तर्फबाट गर्नुपर्ने खर्च निश्चित भएको देखिन्छ। ब्राम्हण लगायत चाण्डालसम्मलाई घृताशनसमितदि भोजन गराउने उल्लेख छ। यो चलन आजसम्म पनि चलेको छ। भक्तपुर जङ्गममठबाट प्रत्येक वर्ष भाद्र पूर्णिमाका दिन दुध, घ्यू र चामलको खीर बनाई ब्राम्हणदेखि क्षुद्रसम्मलाई खुवाउने गरीएको छ ।

७. ऐ.ऐ. को पृष्ठ १२६ मा यसरी लेखिएको छ- खर्चको बाँडफाँड गर्दा कुलपतिका तर्फबाट गर्नुपर्ने खर्च निश्चित भएको देखिन्छ । ब्राम्हण लगायत चाण्डालसम्मलाई घृताशनसमितदि भोजन गराउने उल्लेख छ। यो चलन आजसम्म पनि चलेको छ। भक्तपुर जङ्गममठबाट प्रत्येक वर्ष भाद्र पूर्णिमाका दिन दूध, घ्यू र चामलको खीर बनाई ब्राम्हणदेखि क्षुद्रसम्मलाई खुवाउने गरीएको छ ।

८. हरिराम जोशी, नेपालको प्राचीन अभिलेख (२०३०), पृष्ठ ४८१ देखि ४८८ सम्म ।

९. धनवज्र वज्राचार्य, लिच्छविकालका अभिलेख, चाँगुनारायणका सबै प्रसंगमा उल्लेख भएका छन् ।

अन्यौलको वातावरणलाई स्वच्छता ल्याउन अनुसन्धानले बल प्रदान गर्नेछ, त्यसैले अनुसन्धान रोकिनु हुँदैन र निरन्तर चलिरहनु पर्छ ।

लोकपालस्वामीले निश्चित् रूपमा वैष्णव देवतालाई मात्र बुझाउँदैन जुन सम्प्रदायका व्यक्तिले यसको प्रयोग गरेका हुन्छन् उनैका इष्टदेवताका रूपमा यो शब्द प्रयोग भएको मान्नुपर्छ । यदि लिच्छवि राजा नरेन्द्रदेव वैष्णवमत अनुयायी भएका भए यो लोकपालस्वामीले वैष्णवदेवतालाई जनाउँदथ्यो । तर लिच्छविकालका राजा नरेन्द्रदेवको नामको अगाडि "परममाहेश्वर, परमभट्टारक र पशुपतिभट्टारकपादानुध्याता महाराजधिराज" भन्ने पदवी गाँसिने हुँदा स्पष्ट रूपमा नरेन्द्रदेव शैव मतका कट्टर अनुयायी हुन् भन्न सकिन्छ ।[१०] यी माथिका तथ्यलाई कुनै ध्यान नै नदिई लोकपालस्वामीलाई वैष्णवदेवता हुन् भनेर धेरै इतिहासविद् र अनुसन्धानकर्ताहरूले एकै स्वरले भन्ने गरेका हुँदा हामी ऐतिहासिक तथ्यबाट बञ्चित हुन पुगेका छौं । यस सम्बन्धमा हामी वर्तमानका अनुसन्धानकर्ताको काँधमा नयाँ जिम्मेवारी आएको महसूस भएको छ । अनुसन्धान भन्ने निरन्तर चलिरहने कुरा हो त्यसैले अनन्तलिङ्गेश्वरको अभिलेखमा उल्लेखित लोकपालस्वामी वैष्णवदेवता हुन् वा शैवदेवता हुन् भन्ने सम्बन्धमा अहिलेसम्म भएको अनुसन्धानले यसलाई 'शैवदेवता' हुन् भन्ने साबित गरेको छ । त्यसैले अनन्तलिङ्गेश्वरको नरेन्द्रदेवको अभिलेखमा उल्लेख भएको लोकपालस्वामी शैवदेवता नै हुन् ।

---

१०. धनवज्र वज्राचार्य, लिच्छविकालका अभिलेख, संख्या १३३ पृष्ठ ४९६-४९८, संख्या १३४ पृष्ठ ४९९-५०६ र संख्या १२९, पृष्ठ ४८५-४८९ ।

# सामाज्येश्वर महादेव मन्दिर तथा धर्मशालाको जीर्णोद्धार तथा व्यवस्थापन एक रिपोर्ट

– भेषनारायण दाहाल

## ऐतिहासिक पृष्ठभूमि

भारतको उत्तर प्रदेशस्थित वाराणसी हिन्दूहरूको पवित्र तीर्थस्थलहरूमध्ये एक हो । परापूर्वकालदेखि नेपालीहरू ज्ञान हासिल गर्न र आफ्ना पितृहरूको उद्धार गर्न वाराणसी जाने गर्दछन् ।

वाराणसीमा रहेका विभिन्न घाटहरूमध्ये ललिताघाट र राजराजेश्वरी घाट प्रख्यात छन् । यी घाटहरू श्री रणबहादुर शाहका रानीहरू ललीतत्रिपुरासुन्दरी र राजराजेश्वरी देवीको नामबाट राखिएका हुन् । श्री रणबहादुर शाह स्वामी "निर्गुणानन्द" भएपछि केहि वर्ष काशीमा बसेका थिए । उनले जप गर्ने आसन हाल पनि ललिताघाटमा सुरक्षित छ ।

साम्राज्येश्वर महादेव मन्दिर श्री ५ राजेन्द्र वीर विक्रम शाहदेवको समयमा उनकी रानी साम्राज्यलक्ष्मी देवी शाहको अन्तिम इच्छा अनुसार श्री ५ राजेन्द्र र श्री ५ सुरेन्द्रले साम्राज्येश्वर महादेव मन्दिर र धर्मशाला वि.सं १९०० सालमा बनाउन लगाएको कुरा मन्दिरको गजुरमा रहेको अभिलेखबाट बुझ्न सकिन्छ । सोही अभिलेख अनुसार यो मन्दिर बनाउन खजाञ्ची शिव प्र. अर्याल खटिएर आएका थिए ।

गजुरमा भएको अभिलेख निम्न प्रकारको छ ।

"स्वस्ति श्री श्री श्री श्री श्री नेपालका वडामहारानी साम्राज्ये लक्ष्मि देवी वाट १८९८ साल आश्विन वदि ६ रोज ४ का दिन स्वर्ग्य होइबक्सनु हुन्या वषतमा श्री काशीमा श्री शिव स्थापना देवालय चौघेरा मेरा निमित्त वनाउनु भनि हुकुम बक्सनु भयाको थियो । पछि १९०० सालमा श्री श्री श्री श्री श्री महाराजाधिराज राजेन्द्र विक्रम शाह श्री श्री श्री श्री श्री युवराजधिराज सुरेन्द्र विक्रम शाहबाट बनाई श्री साम्राज्येश्वर प्रिति गरी संवत १९०० साल मिति माघ वदि ३ रोज ४ का दिन चढाइ बक्सनु भयाको गजुर हो यो गजुर बनाउनाको मार्फत षजाचि शिव प्रसाद अर्याल शूभम् ।" त्यस्तै डा. जगदिशचन्द्र रेग्मीज्यूका अनुसार यो मन्दिर बनाउन रू. ४,४४०।- खर्च लागेको कुरा शाहकालीन वास्तुकलामा उल्लेख गर्नुभएको छ ।

यो मन्दिर ४५ फुट उचाइको छ । २७ फुट लम्बाई र २७ फुट चौडाईको छ । यसमा काष्ठकलाका ज्यादै उत्कृष्ट कालिगडी देख्न सकिन्छ । देश बाहिर यस्तो प्रकारको मन्दिर अन्त कतै पनि छैन । त्यसैले पनि यसको महत्त्व ज्यादै छ । यो मन्दिर गंगाको किनारमा दक्षिणतर्फ फर्केको छ । यसका ४ वटा ढोकाहरू छन् । यो मन्दिर भित्र शिवलिङ्ग छ । यो मन्दिरको भित्र चारकुनामा शिव पाञ्चायन देवताहरू सूर्य,

विष्णु, गणेश र भगवतीका मूर्तिहरू छन् । जीर्णोद्धार गर्दा सूर्यको मूर्ति चोरी भई हराएको थियो । पछि काठमाडौंबाट लगेर पुन: प्रतिस्थापन गरियो । यो मन्दिर नेपाली तले शैलीमा निर्माण गरिएको छ । पशुपतिनाथको मन्दिरसंग मेल खाने हुनाले काशीमा अधिकांश नेपालीहरू यो मन्दिरलाई पशुपतिनाथको मन्दिरको रूपमा पनि चिन्दछन् ।

त्यस्तै मन्दिरका खुड्किलामा रहेका लकुलिश र भैरवका मूर्तिहरू पहिले नै हराइसकेकोमा मन्दिर जीर्णोद्धार गर्दा नेपालबाट लगेर पुन: प्रतिस्थापन गरियो । चौघेरा धर्मशालाको बीचमा चोक छ । ३ मुखे झ्यालहरू ज्यादै कलात्मक छन् । टुँडालहरू, मेठहरू, थामहरू आदि सबै काष्ठकलाका उत्कृष्ट कालिगडीका नमूनाका रूपमा देख्न सकिन्छ । धर्मशाला भित्र प्रवेश गर्ने कोहि पनि नेपालीले आफूलाई नेपालको भक्तपुरको कुनै चोकमा भएको अनुभूति गर्दछ । यो ज्यादै सुन्दर छ ।

## जीर्णोद्धार कार्य

यो मन्दिरको निर्माण भएपछि २०३५ सालसम्ममा कहिले-कहिले यसको जीर्णोद्धार भएको थियो त्यसको कुनै लिखित प्रमाणहरू पाइएको छैन । तैपनि वि.सं २०२० सालमा भवन विभाग र गुठी संस्थानको सक्रियतामा धर्मशालाको जीर्णोद्धार भएको कुरा गुठी संस्थानबाट थाहा हुन आएको छ ।

वि.सं. २०३५ सालमा स्वर्गवासी राजा रानी श्री ५ वीरेन्द्र वीर विक्रम शाहदेव र ऐश्वर्य राज्य लक्ष्मी देवी शाहबाट मन्दिरमा सवारी भई पूजाआजा गरिबक्सि पुरातत्त्व विभाग र गुठी संस्थानलाई मन्दिर र धर्मशालाको जीर्णोद्धार गर्न निर्देशन बक्स भएको थियो । त्यसपछि २०३५/१२/६ को मन्त्रीपरिषद्को निर्णय अनुसार सो धर्मशालाको जीर्णोद्धार सम्बन्धी अध्ययन गर्न श्री अध्यक्ष गुठी संस्थान, श्री महानिर्देशक पुरातत्त्व विभाग, श्री का.मु. चिफ इन्जीनियर आवास भवन तथा भौतिक परियोजना विभाग र श्री सांस्कृतिक सहचारी शाही नेपाली राजदूतावास दिल्ली समेतको एउटा टोली बनारस गएको थियो सो टोलीले स्थलगत भ्रमण गरी पुरातात्त्विक विशेषता र जीर्णोद्धार सम्बन्धी एउटा प्रतिवेदन दिएको थियो । जसमा मुख्य-मुख्य निम्न लिखित छन् ।

क) मन्दिर र धर्मशाला नेपाली वास्तुकलाको एउटा सुन्दर र उच्चकोटीको नमूनाको रूपमा रहेको हुनाले यसको सावधानीका साथ संरक्षण र सुरक्षा गर्नुपर्ने ।

ख) मन्दिर र धर्मशालाको जीर्णोद्धार गर्दा यसको मौलिक शैलीमा नै जीर्णोद्धार गर्नुपर्ने ।

ग) धर्मशाला चोक शैलीमा बनेको तर यसको तीन लङमात्र रहेकोले अर्को लङको पुन: निर्माण गर्नुपर्ने ।

घ) धर्मशालाको जीर्णोद्धार गर्दा रासायनिक उपचार गरी प्रयोगमा लिन सकिने जति काष्ठकलाकृतिको पुन: प्रयोग गरी नष्ट भएका काष्ठकला कृतिहरूलाई हुबहु नयाँ बनाई प्रयोग गर्नुपर्ने ।

ङ) मन्दिरको छानामा प्रयोग भएको झिँगटीहरू नेपालबाट नै ल्याइएको हुनाले र बनारसमा नबन्ने हुनाले झारपातहरू उम्रेर समस्या पर्ने आदि कारणले गर्दा संरक्षणमा समस्या आइपर्ने हुनाले यसको सट्टा स्थायी सामग्री प्रयोग गर्नसके समस्याको निराकरण हुनसक्ने महसूस गरी हाम्रो प्राचीन परम्परागत वास्तुकलामा पनि झिँगटी, पित्तल वा तामामा सुन मोलम्वा भएको पाइन्छ । तामामा सुन मोलम्वा महँगो पर्ने हुनाले मितव्ययीता र व्यवहारिक दृष्टिबाट पित्तलको छाना राख्न उपयुक्त हुने ।

च) बनारसको चौघेरा धर्मशालाको एक ठाउँमा नेपालको परिचय दिने किसिमको वाचनालय तथा नेपाल सम्बन्धी पुस्तकालय समेतको सूचना केन्द्र खोल्नु अत्यन्त सामयिक हुने र विदेशी पर्यटकहरूलाई नेपाल सम्बन्धी जानकारीहरू उपलब्ध गराई धार्मिक तिर्थयात्रीहरूलाई नेपालमा भित्र्याउन सकिने सम्भावना देखिन्छ ।

छ) मन्दिर र धर्मशालाको जीर्णोद्धार गर्दा ज्यादै सावधानीपूर्वक नेपाली मौलिकतामा आँच नआउने गरी भक्तपुरको मठहरूको सफल र सही ढङ्गले

जीर्णोद्धार गरे जस्तै उच्चकोटीको पुरातात्त्विक जीर्णोद्धार गराउनु पर्ने ।

ज) परम्परागत निर्माण सामाग्रीहरू काठमाडौंबाट नै ढुवानी गरी लैजानुपर्ने ।

माथिका सूझावहरूको आधारमा रु. १०,००,०००।- निकासा भयो र पुरातत्त्व विभागले ऋषिकेशव रेग्मी र दुर्गारत्न वज्राचार्यलाई वनारसको साम्राज्येश्वर महादेव मन्दिर र धर्मशाला जीर्णोद्धार गर्न खटाएको थियो । त्यसपछि मन्दिरमा भएको झिँगटीको छाना हटाएर पित्तलको छाना राख्ने काम भयो । मन्दिरका टुँडालहरू, धर्मशालाका सामानहरू, ढोकाहरू सबै पाटन औद्योगिक क्षेत्रबाट बनारस पुऱ्याइए पनि मन्दिरमा केहि टुँडालहरू राख्ने काम भयो । धर्मशालाको केहि पनि काम हुनसकेन । धर्मशाला बेवारिसे अवस्थामा रहेपछि काशीका राजा डा. विभूतिनारायण सिंहले ३० नोभेम्बर १९९२ मा स्व. श्री ५ वीरेन्द्रलाई घाटहरूको सुन्दरताको रूपमा रहेको ललिताघाटमा नेपाली धर्मशालाको जीर्णोद्धार गरी सांस्कृतिक सूचना केन्द्र खोल्न एक पत्र पठाएका थिए । त्यसपछि तत्कालिक प्रधानमन्त्री गिरिजा प्र. कोइराला प्रथमपटक प्रधानमन्त्री भएर भारत भ्रमणमा जानु भएको अवस्थामा फर्कदा ललिताघाटस्थित नेपाली मन्दिरमा पनि भ्रमण गर्नु भएपछि पुरातत्त्व विभागलाई मन्दिर र धर्मशालाको जीर्णोद्धार गर्न निर्देशन दिनुभएको थियो ।

त्यसै अनुसार २०५०/९/५ को मन्त्रीपरिषद्को निर्णय अनुसार तत्काल ने.रू. १० लाख निकासा गरियो । पुरातत्त्व विभागबाट परियोजना प्रमुख भेषनारायण दाहाल, ओ.सी. गोपाल झा र सह-लेखापाल न्हुच्छेरत्न महर्जनलाई खटाइएको थियो ।

आ.व. ०५०/०५१ पहिलो वर्षमा धर्मशालाको पश्चिमपट्टिको भाग जीर्णोद्धार गर्ने काम भयो ।

आ.व. ०५१/०५२ मा रकम निकासा भएन । आ.व. ०५२/०५३ मा ३ लाख निकासा भयो । त्यो वर्ष उत्तरतर्फका झ्याल र पेटीहरू बनाउने काम भएको र पूर्वतर्फको लागि काठ किन्ने काम भएको थियो ।

आ.व. ०५३/०५४ ने.रू. १५ लाख निकासा भएको सो वर्ष उत्तरतर्फको धर्मशालाका झ्यालहरूको मर्मत, काठका थामहरूको मर्मत र उत्तरतर्फको धर्मशालाको पूरा जीर्णोद्धारको काम गरिएको थियो । भारतमा बसोबास गरेका नेपालीहरूबाट एक समिति बनाएर त्यसको व्यवस्थापन गर्ने निर्णय भयो ।

आ.व. ०५४/०५६ मा १८ लाख निकासा भएको थियो । सो वर्ष पूर्वपट्टिको धर्मशालाको जीर्णोद्धार गर्ने काम गरियो ।

आ.व. ०५५/०५६ सालमा ने.रू. १८ लाख निकासा भएको थियो सो वर्ष पूर्वपट्टिको धर्मशालाको बाँकी कामहरू, शौचालयहरू बनाउने काम गरियो साथै धर्मशालाको दक्षिणतर्फको भाग सम्पूर्ण जगदेखि नै पुन: निर्माण गर्ने काम पूरा गरियो ।

आ.व. ०५६/०५७ सालमा १४,५०,००० निकासा भएकोमा साम्राज्येश्वर महादेव मन्दिरको पहिलो तल्ला बढो होसियारपूर्वक टेवा दिएर जग लगाएर पुराना सडेगलेका काठहरू हटाइ, पहिले काठमाडौंबाट लगेका काठका कलात्मक झ्यालढोकाहरू पहिलेको जस्तै हुवहु मिलाएर मन्दिरमा फेर्ने काम भयो । फेर्न नपर्ने टुँडालहरूलाई मर्मत गरी होसियारिपूर्वक पुन: लगाउने काम भयो ।

सोही वर्ष मन्दिर परिषद्मा अनाधिकृतरूपले बनाएको परेवाको खोर र एउटा शिव मन्दिर भत्काउने काम गरी वातावरण सुधार गर्ने काम गरियो । मन्दिरबाट र धर्मशालाबाट किराले खाएका, सडेको काठहरू, टुँडालहरू, झ्यालढोकाहरू आदिलाई जम्मागरि रासायनिक उपचार गरेर मन्दिर परिसरमा एउटा काष्ठकला संग्रहालय बनाउने कार्य गरियो । यो संग्रहालय हेर्न विदेशीहरूले भा.रू. १०।- को टिकट लिएर प्रवेश गर्ने गर्दछन् । यसबाट समेत समितिलाई केहि आर्थिक लाभ भएको छ ।

आ.व. ०५८/०५९ सालमा करिब २४ लाख निकासा गरी धर्मशालाको पछाडीपट्टिको साँधमा जोडिएको डा. एस.वि. शुक्लाको भवन खरिद गरी त्यसलाई मर्मत सम्भार गरी मिति २०५९/३/६ गते तत्कालिक संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्री श्री बलबहादुर के.सी.ज्यूले पशुपति वृद्धाश्रमको उद्घाटन गर्नुभएको थियो ।

हाल सो वृद्धाश्रममा काशीवासमा गएका असहाय वृद्ध महिलाहरू २६ जनालाई बस्ने व्यवस्था मिलाइएको छ ।

**समस्याहरू**

(क) पण्डाहरूको समस्या

नेपाली मन्दिर र धर्मशाला नेपाल बाहिर भएको कारणले नेपाल सरकारले समय-समयमा उचित ध्यान पुऱ्याउन नसकेकाले विगत २७/२८ वर्ष अगाडिदेखि स्थानीय शुक्ला थरका पण्डाहरूले अतिक्रमण गरी बसी आएका थिए । तिनीहरू आफूलाई पूजारी भनि सर्वसाधारण नेपालीहरूलाई मन्दिर प्राङ्गणमा पस्न दिँदैनथे । मन्दिर भित्र विदेशीहरूलाई प्रवेश गराएर रूपैंया आर्जन गर्दथे । तिनीहरूले सो क्षेत्रमा अन्य गैरकानूनी कार्य समेत गरेको कुरा स्थानीय बासिन्दाहरू बताउँदथे । तर तिनीहरूको डरले कसैले पनि स्थानीय प्रशासन समक्ष उजुरी गरेका थिएनन् ।

उनीहरू धर्मशाला छोड्न चाहँदैनथे । डर देखाउने, धम्काउने, मानिसहरूको सामानहरू लुट्ने जस्ता कार्यले गर्दा मन्दिर परिसर बद्नाम भइसकेको थियो । धर्मशाला जीर्णोद्धारको सिलसिलामा महामहिम राजदूत डा. भेष ब. थापाज्यू मिति २०५५ सालमा वनारस हिन्दू विश्व विद्यालयको एक कार्यक्रममा पाल्नु हुँदा वहाँलाई नेपाली मन्दिर परिसरमा भ्रमण गराइयो र सम्पूर्ण वस्तुस्थितिको अवगत गराउने कार्य भयो । धर्मशाला र मन्दिरको जीर्णोद्धार कार्य समाप्त भएपछि भारतका लागि शाही नेपाली राजदूत संरक्षक रहनु भएको वनारसस्थित नेपालीहरू संलग्न एक साम्राज्येश्वर पशुपतिनाथ महादेव मन्दिर तथा धर्मशाला संचालक समिति (ट्रष्ट) बनाउने, पण्डाहरूलाई केहि रकम दिएर धर्मशाला परिसर बाहिर हटाउन जरूरी भएको कुरामा सहमति भयो । परियोजना सञ्चालन गर्ने सिलसिलामा हामीद्वारा परराष्ट्र मन्त्रालय मार्फत् भारतीय सरकारसंग सम्पूर्ण कुराहरूको अवगत गराई सुरक्षाका आवश्यक व्यवस्था मिलाएर परियोजना सञ्चालन गरियो । परियोजना समाप्त भएपछि पण्डाहरूलाई केहि रकम दिएर धर्मशाला छोडाउने शर्तमा श्री ५ को सरकार मन्त्रीपरिषद्को ०५६/१२/३ को निर्णयानुसार भा.रू. २ लाख निकासा गरी मन्दिर व्यवस्थापन पक्षलाई उक्त रकम दिएर पण्डाहरूलाई धर्मशालाबाट हटाउने काम भयो । हाल धर्मशाला पण्डाहरूको अतिक्रमणबाट मुक्त भएको छ । मन्दिर स्थापनाका समयमा मन्दिरमा चढाएको नगरा (तामाको) पण्डाहरूको कब्जामा रहेको थाहा पाएपछि सो नगरा हामीले पण्डाबाट लियौं र गुठी संस्थानको सहयोगमा मर्मत गरेर हाल बजाउने गरिएको छ । सो नगरामा निम्नलिखित अभिलेख छ । "श्री साम्राज्येश्वर प्रीतये अर्पित स्वस्ति श्री सम्वत १९०० आषाढ वदि ५ रोज ६ शुभम् ।" यसबाट यो नगरा वि.सं १९०० साल आषाढ ५ गते शुक्रवार चढाएको बुझिन्छ ।

(ख) कालिगड र सामानहरूको समस्या

नेपाली काष्ठकलाका उत्कृष्ट नमूनाका रूपमा रहेका यी मन्दिर र धर्मशालाका काष्ठ कलाकृति बनाउने कालिगडहरू काठमाडौंबाट लैजानु पर्ने, त्यो पनि मार्गदेखि फागुनसम्मको मौसममा मात्र काम गर्न सम्भव हुने अन्य महिनामा बनारसको तापक्रम बढेर ४५ देखि ४८ डिग्रीसम्म पुग्ने भएकाले कहिलेकाहीं बैशाखसम्म बस्नुपर्ने अवस्थामा कालिगडहरू बिरामी भई बीचमा काम अधुरो छोडी फर्कने समस्याहरू थुप्रै आए । पटकपटक काठमाडौं आई अर्को नयाँ कालिगडहरूलाई आउने जाने भाडा परियोजनाबाट मिलाउने शर्तमा बुङ्गमती र भक्तपुरका धेरैजना कालिगडहरूलाई बनारस लगि काम गराउने कार्य गरियो ।

त्यस्तै मन्दिर संरक्षण गर्दा धेरै नेपाली कालिगडहरूले असम्भव ठानेको, इन्जिनियरहरूले जोखिमपूर्ण छ भनेको मन्दिरलाई चारैकुनाबाट जगको टेवा दिएर सबै पुराना काठहरू फेर्नु सानो चुनौतीपूर्ण कार्य थिएन । शुरूमा मन्दिर भित्रका खम्बाहरू, मेठहरू बढो सावधानीपूर्वक एक पछि अर्को गरि टेवा दिएर फेर्ने काम भयो । तर बाहिरी गारोलाई टेवा दिएर ढोकाहरू फेर्ने काम गर्न ज्यादै कठिन थियो । सामान्य कालिगडहरूले फेर्न नसकेपछि वर्षात्को समयमा काठमाडौं आई भक्तपुर निवासी श्री लक्ष्मी प्र. राजचलको नेतृत्वमा गएको कालिगडहरूले बडो सावधानीपूर्वक असम्भव जस्तो देखिएको कामलाई सम्भव गराई कुनै पनि नोक्सानी

नपुऱ्याइकन जीर्णोद्धारको कार्य सम्पन्न गरियो । यो कार्य गर्ने लक्ष्मीप्रसाद राजचल धन्यवादका पात्र **छन्** ।

**धमिरा लाग्ने समस्या**

बनारस समुद्र सतहदेखि २६५ फूट उचाईमा पर्दछ । यो गंगाको किनारमा रहेको कारणले गर्दाखेरि धेरैजसो ठण्डामा **यहाँको** आद्रता (Moisture) बढी **हुन्छ** ।

जाडो महिनामा ४० डिग्री **फरेनहाइटदेखि** ६० डिग्री फरेनहाइटसम्म हुन्छ भने गर्मीमा १०३ डिग्री **फरेनहाइटदेखि** ११५ डिग्री फरेनहाइट करिब ४७ डिग्री ४८ डिग्रीसम्म तापक्रम बढ्छ । यस्तो अवस्थामा सँखुवाको काठमा धमिराहरू र अन्य Termite हरू छिट्टै बढ्ने **वातावरण** तयार **हुन्छ** र काठ Organic material भएकाले ती **धमीराको खाद्यवस्तु हुन** जान्छ ।

**उपचार तथा नियन्त्रण**

धमिरा लागेका काठहरूलाई परियोजना सञ्चालन भएको समयमा क्लोरोपाइरीफोरस १ भाग, ९ भाग मट्टितेल, १० भाग लिन्सीड आयल मिलाएर घोल बनाएर काठमा रासायनिक उपचार गरियो । त्यस्तै बालुवाका कणहरूलाई ब्रसले सफा गर्ने काम गरियो ।

**मन्दिर र धर्मशालाको सञ्चालन व्यवस्था**

श्री ५ को सरकार, पुरातत्त्व विभागले आ.व. ०५०/०५१ देखि मन्दिर र धर्मशाला जीर्णोद्धार गर्ने समयसम्ममा ने.रू. ७८,६६,०००।- खर्च गरिसकेको छ । यत्रो ठूलो रकम खर्च गरेर जीर्णोद्धार गरेको मन्दिर र धर्मशालाको **व्यवस्थापन** गर्ने निकाय नभएमा यो फेरि लावारिस भएर १० वर्षपछि पहिलेको अवस्थामा पुग्ने डर भएकोले मन्दिर र धर्मशाला व्यवस्थापनको कार्य सुचारूरूपले सञ्चालन गर्न श्री ५ को सरकारले ०५६।२।१० को निर्णयानुसार शाही नेपाली राजदूत संरक्षक रहनु भएको एक साम्राज्येश्वर पशुपतिनाथ महादेव मन्दिर तथा धर्मशाला संचालक समिति (ट्रष्ट) ललिताघाट वारायणसीको कार्यविधि नियम २०५६ गठन गरेको छ ।

यो समितिमा उपाध्यक्ष, कोषाध्यक्ष, महासचिव, सहसचिव र सदस्यहरूमा विद्या धर्म प्रचारिणी समिति वाराणसी, पुरातत्त्व विभाग, गुठी संस्थान, डि.एम. वाराणसी, नेपाली संस्कृत छात्र परिषद्का अध्यक्ष, प्रथम सचिव, शाही नेपाली राजदूतावास, नयाँ दिल्ली आदि पदेन सदस्य रहने गरी ट्रस्टले जम्मा १६ सदस्यीय संचालक समितिको गठन गरी अध्यक्षमा ओंकारानन्द गिरीलाई नियुक्त गरेको छ । यो समितिले मन्दिर र धर्मशालाको राम्रोसंग सञ्चालन गरेको छ ।

**आय स्रोतहरू**

नेपालका अन्य मन्दिरहरूमा झैं यो मन्दिरको आय श्रोतमा भक्तजनहरूले चढाएको भेटिहरू, धर्मशालामा बास बस्ने आउने तीर्थयात्रीहरूबाट प्राप्त रकमहरू आदि हुन् । यो मन्दिर र धर्मशाला निर्माण गरेको अवस्थामा श्री ५ राजेन्द्र वीर विक्रम शाहदेवको समयमा मन्दिर र धर्मशालाको व्यवस्थापन सञ्चालन गर्न नेपालका विभिन्न ठाउँहरूमा जस्तै बारा, पर्सा, रौतहटमा १७१५ विगाहा जमिन गुठी राखेको कुरा गुठी संस्थानबाट बुझिन आयो । तर यसमा १५०० विगाहा जमिन रैकरमा परिणत भइसकेको र बाँकी जमिनको पनि आम्दानी गुठी संस्थानले उठाउन नसकेको कुरा गुठी संस्थानले बताएको छ ।

यो मन्दिरमा पूजा गर्ने पूजारी एकजना र दुइजना सुरक्षागार्ड गरी ३ जनाको लागि घटिमा मासिक भा.रू. ५०००।- आवश्यक पर्ने भएकोले गुठी संस्थानसंग अनुरोध गर्दा ०५६ सालमा ६०,०००।- भा.रू. प्राप्त भएको थियो । ०५७ सालमा गुठी संस्थानबाट कुनै पनि रकम प्राप्त नभएको अवस्थामा संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयसंग मन्दिर संचालक समितिले भा.रू. ५ लाखसम्म अक्षयकोष राख्ने व्यवस्थाको लागि अनुरोध भई आएपछि त्यसको लागि ने.रू. ७,७०,०००।- निकासा गरी पठाइ दिएपछि त्यसमा ट्रष्टले बाँकी रकम थपी भा.रू. ५ लाखको अक्षयकोष राखी त्यसको वार्षिक व्याजबाट धर्मशालाको सुरक्षागार्डहरूलाई पारिश्रमिक दिने काम भएको छ । यो वर्ष गुठी संस्थानले नित्य पूजाआजा गर्न र पर्व पूजाको लागि दरबन्दी कायम गरी वार्षिक ने.रू. १ लाख दिने निर्णय गरेको कुरा गुठी संस्थानबाट बुझिन आएको छ ।

## टिकटबाट आम्दानी

मन्दिर र धर्मशाला जीर्णोद्धार गर्दा बचेका काष्ठ कलाकृतिहरूलाई रासायनिक उपचार गरी Wooden Art Museum मा राखिएको छ । त्यसमा विदेशी पर्यटकहरूलाई भा.रू. १०।- का दरले प्रवेश शुल्क लगाइएको छ । त्यसबाट पनि वार्षिक ५०/६० हजार भा.रू. आम्दानी हुने सम्भावना

यो वर्ष २०५९ साल आषाढ ६ गते स्व. श्री ५ वीरेन्द्रको प्रथम वार्षिक पूण्यतिथिको अवसरमा नेपाल पर्यटन बोर्डले सांस्कृतिक सूचना केन्द्र नेपाली धर्मशालामा खोल्यो । सो सूचना केन्द्रको उद्घाटन तत्कालिक संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्री बलबहादुर के.सी.ले गर्नुभएको थियो । यो आ.व. ०५९/०६० श्रावणदेखि सो सूचनाकेन्द्रमा काम गर्ने कर्मचारीहरूको लागि भा.रू. ५०,०००।- नेपाल पर्यटन बोर्डले सो समितिलाई दिने निर्णय गरेको छ । यो पनि ट्रष्टको आम्दानीको स्रोत हुनगएको छ ।

सोही दिन काशीमा बसेका असहाय वृद्धाहरूको लागि सुविस्तासंग बस्ने व्यवस्था होस् भनि तत्कालिक मन्त्री बलबहादुर के.सी.ले पशुपति वृद्धाश्रमको उद्घाटन गर्नुभएको थियो । सो वृद्धाश्रममा हाल नेपाली नारीहरू जसको बाँच्ने आधार छैन । जसको कोहि पनि छैनन् । जो प्राण त्याग गर्न काशीमा आएका छन् तिनीहरूलाई ट्रष्टले बसोबास गर्न दिएको छ ।

## पुरातत्त्व विभागले ध्यान दिनुपर्ने कार्यहरू

नेपाल र नेपालीहरूको गौरवको रूपमा रहेको यस मन्दिर र धर्मशालाको सम्पूर्ण जीर्णोद्धारको कार्य पुरातत्त्व विभागले ने.रु. ७८,६६,०००।- खर्च गरी सम्पन्न गरिसकेको छ । यत्रो ठूलो रकम खर्च भइसकेकोले पटकपटक नेपालबाट आएर रेखदेख गर्न सम्भव नभएकोले र यस स्मारकलाई विभागले शुरूदेखि नै आत्मनिर्भर स्मारक- (Self Sustainable Monuments) को रूपमा विकास गर्ने लक्ष्य राखे अनुरूप यो मन्दिर र धर्मशालाको रेखदेख, व्यवस्थापन आदि सम्पूर्ण कार्य गर्ने जिम्मा साम्राज्येश्वर पशुपतिनाथ महादेव मन्दिर तथा धर्मशाला संचालक समितिलाई दिएपनि प्रत्येक वर्ष रासायनिक उपचार अनिवार्य रूपमा गर्न निर्देशन दिनुपर्दछ । नत्र धमिराले काष्ठ कलाकृतिलाई हानी पुऱ्याउँदछ ।

हाल समिति पहिले जस्तो आर्थिक समस्याले रूग्ण अवस्थामा नभएकोले सम्पूर्ण आम्दानीको २५ प्रतिशत जति मन्दिर र धर्मशालाको जीर्णोद्धारको लागि अनिवार्य रूपमा छुट्टयाउन लगाउनु पर्ने हुन्छ । त्यसको लागि विभागबाट समितिले मागेको प्राविधिकहरू विभागबाट उपलब्ध गराइ दिनुपर्ने हुन्छ ।

प्रत्येक वर्षको आय-व्यय विवरण विधानमा उल्लेख भए बमोजिम समितिबाट अनिवार्य रूपमा माग गर्नुपर्ने हुन्छ ।

प्रत्येक ३-३ वर्षमा हुने समितिको निर्वाचनमा विभागको प्रतिनिधि पठाउनु पर्ने हुन्छ । बाहिरबाट समितिलाई आवश्यक परेको बखतमा सहयोग पनि दिंदै मन्दिर धर्मशाला र वृद्धाश्रमको रेखदेख राम्रोसंग भए नभएको निगरानी गर्नु जरूरी हुन्छ । शाही नेपाली राजदूतावास, नयाँ दिल्लीमा सम्पूर्ण कार्यहरूको जानकारी दिन समितिलाई निर्देशन दिनुपर्दछ । हाल सबै समस्याहरूको समाधान भयो भनि पुरातत्त्व विभाग चुप लागेर बस्नु हुँदैन । समय-समयमा रेखदेख पुऱ्याउनु जरूरी हुन्छ ।

जीर्णोद्धार अघिको सत्तल

जीर्णोद्धार पछिको सत्तल

ललिताघाटस्थित रणबहादुर शाहले जप गर्ने आसन

जीर्णोद्वार पछिको साम्राज्येश्वर महादेव मन्दिर

सम्बत् १९०० को अभिलेख भएको नगरा

# पुरातत्त्व विभागको गतिविधि (आ. व. ०५८/५९)

—शोभा श्रेष्ठ

२००९ सालमा पुरातत्त्व विभागको स्थापना भएदेखि अधिराज्यभरि छरिएर रहेका स्मारकहरूको (मूर्ति, मठ, मन्दिर, पाटी, पौवा, देवालय, शिवालय, द्योछेँ, चपाल, सत्तल, ढुङ्गेधारा, जलद्रोणी र प्राचीन कुवाहरू) संरक्षण तथा संवर्द्धन गर्ने दायित्व यस विभागमा रहेको छ । हाम्रो संस्कृति तथा सभ्यताको रूपमा रहेका मूर्त तथा अमूर्त सम्पदाहरू, रीतिरिवाज, जात्रा, पर्व, धार्मिक नाच तथा पुरातात्त्विक एवं ऐतिहासिक वस्तुहरू, प्राचीन अभिलेखहरू संरक्षण गर्दै लैजानु आजको आवश्यकता पनि भएको छ । अहिलेको बदलिंदो परिस्थितिमा आधुनीकीकरण तर्फ उन्मुख हाम्रो समाजलाई यी प्राचीन परम्परागत संस्कृतिबारे बोध गराई त्यसलाई जगेर्ना गर्नेतर्फ उन्मुख गराउनु अति कठिन कार्य भइसकेको छ । तर पनि हामीले आफ्नो प्रयासलाई कठिन परिस्थिति बाबजुद पनि जारी राखेका छौं । किनभने यिनै मूर्त तथा अमूर्त सम्पदाहरूले हामीलाई त्यस समयको सभ्यता, परम्परा, जीवनशैली तथा देश परिवेशबारे अदृश्य रूपमा सचेत गरिरहेको हुन्छ ।

यस प्रकारका प्राचीन वस्तुहरूको संरक्षण गरी हाम्रो संस्कृतिलाई जोगाई राख्नु हामी सबैको जिम्मेवारी भए तापनि यसमा संलग्न विभिन्न निकायहरू जस्तै- गुठी संस्थान, निजी गुठीहरू र निजी दाताहरू आफ्नो जिम्मेवारीबाट निस्क्रिय र उदासिन हुँदै गएको परिप्रेक्ष्यमा यी सम्पदाहरूको संरक्षण गर्ने जिम्मेवारी पूर्णरूपमा विभागले उठाउनु परेको छ । नेपाल अधिराज्यभरि छरिएर रहेका सांस्कृतिक स्थलहरू, प्राचीन भग्नावशेषहरू साथै ऐतिहासिक थलोहरूको अन्वेषण, उत्खनन्, विश्लेषण गरी त्यसबारे जनतालाई जानकारी गराउन आवश्यक प्रकाशन गर्ने कार्य यस विभागले गर्ने गरेको छ ।

हाम्रा अति महत्त्वपूर्ण सांस्कृतिक सम्पदाहरूको संरक्षण, अन्वेषण, अनुसन्धान गर्ने उद्देश्यले यस विभागको स्थापना भएको हो तर पनि धेरै कठिन परिस्थितिमा विभागले कार्य सञ्चालन गर्नुपरेको छ । यस विभागको पचास वर्षको अवधि हुँदा पनि हालसम्म आफ्नो भवन छैन र राष्ट्रिय अभिलेखालय भवनमा बडो साँघुरो परिस्थितिमा बसेर काम गर्नुपरेको छ । यसले गर्दा दुवै संस्थाबीच सामञ्जस्यता भए पनि विकास तथा विस्तार गर्ने गुञ्जाइस नै छैन । न्यूनतम आर्थिक तथा भौतिक सुविधामा विभागले पचहत्तर जिल्लामा रहेका सांस्कृतिक सम्पदाहरू संरक्षण गर्ने कार्य गर्न बाध्य भएको छ । साथै यस विभागबाट गर्नुपर्ने कार्यहरू श्री ५ को सरकारको विकास योजनाको प्राथमिकता प्राप्त क्षेत्र भित्र नपर्ने हुनाले सीमित मात्रामा बजेट विनियोजित हुने हुनाले कार्यक्षेत्रको तुलनामा लगानी रकम धेरै नै न्यून छ । त्यसले

गर्दा रकम र कार्यक्रममा सामञ्जस्यता स्थापित गर्न विभागलाई धेरै कठिनाई पनि छ । तर पनि प्राप्त स्रोत साधन तथा जनशक्तिबाट सकेसम्म बढी से बढी कार्यक्रमहरू सञ्चालन गर्नेतर्फ यस विभागको कोशिस रहेको छ ।

यस विभागले पचहत्तरै जिल्लामा रहेका स्मारकहरू पुरातात्त्विक तथा ऐतिहासिक स्थलहरूको संरक्षण तथा सम्वर्द्धन कार्य बाहेक विभाग अन्तर्गत रहेको ६ वटा ऐतिहासिक दरवारहरू, ८ वटा राष्ट्रिय र क्षेत्रिय संग्रहालयहरू, राष्ट्रिय अभिलेखालय तथा केन्द्रीय सांस्कृतिक सम्पदा संरक्षण प्रयोगशालाको विकासको लागि पनि आवश्यक व्यवस्था गर्नुपरेको छ ।

यसरी यस विभागको विस्तृत कार्य क्षेत्रलाई दृष्टिगत गर्दा विनियोजित रकम एकदम न्यून रहेका छन् । विगत तीन वर्षको विकासतर्फको राष्ट्रिय वार्षिक वजेट र यस विभागलाई प्राप्त हुने विकास वजेट रकमलाई तुलनात्मक अध्ययन गर्दा निम्न तालिकाबाट राष्ट्रको वार्षिक विकास वजेटको के-कति प्रतिशत रकम यस क्षेत्रको लागि उपलब्ध हुन्छ प्रष्ट हुनेछ । यस क्षेत्रमा गत केही वर्षदेखि केही मात्रामा अन्य निकाय (महानगरपालिका, नगरपालिका, वडा कार्यालय र स्थानीय जनता) बाट पनि केही लगानी हुन थालेको छ तर पनि त्यसको प्रष्ट आँकडा विभागले किटान गर्नसक्ने स्थितिमा छैन ।

| आ. व. | राष्ट्रिय विकास बजेट (रू. हजारमा) | पुरातत्त्व विभागको विकास बजेट (रू. हजारमा) | राष्ट्रिय विकास बजेटमा पुरातत्त्व विभागको विकास बजेटको अनुपात |
|---|---|---|---|
| २०५६/०५७ | ४,१८,५१,८९४ | ४६,२२५ | ०.११०५ |
| २०५७/०५८ | ४,८१,०८,५८९ | ४९,५०० | ०.१०२९ |
| २०५८/०५९ | . ५,०४,७०,२७८ | ७६०४१ | ०.१५०७ |

खासगरि विभागबाट संचालित विभिन्न विकास आयोजना परियोजनाहरू मार्फत् प्रत्येक वर्ष राष्ट्रले लगानी गरेको रकमबाट विभिन्न जिल्लाहरूमा गरिएका संरक्षण, संवर्द्धन, उत्खनन् तथा विकास कामहरूबारे सर्वसाधारण सबैमा जानकारी गराउने उद्देश्यले यस विभागले आफ्नो मुखपत्र प्राचीन नेपालमा एक वर्ष भित्र भए गरेका कामहरूको विवरण प्रकाशन गर्दै लैजाने नीति लिए अनुरूप यस अंकमा आर्थिक वर्ष ०५८/५९ मा विभिन्न आयोजना परियोजनाबाट भएका विकास कार्यक्रमहरूको साथै अन्य कार्यहरूको संक्षिप्त विवरण प्रस्तुत गरिएको छ ।

### १. पुरातात्त्विक स्थल संरक्षण तथा सुधार आयोजना

यस आयोजनामा पूर्व मेचीदेखि पश्चिम महाकालीसम्म (विश्व सम्पदा संरक्षण क्षेत्र वाहेक) का स्मारकहरूको संरक्षण, पुरातात्त्विक स्थलहरूको अन्वेषण, उत्खनन् यस विभाग अन्तर्गतका ६ वटा दरवारहरू, आठवटा संग्रहालयहरू, राष्ट्रिय अभिलेखालय र केन्द्रीय सांस्कृतिक सम्पदा संरक्षण प्रयोगशालाको विकास कार्यक्रमहरू पर्दछन् । साथै जनसहभागिताबाट संचालित कार्यक्रमहरूका साथै अपर्झट आइपर्ने आकस्मिक जीर्णोद्धार कार्य पनि यसै आयोजना अन्तर्गत सञ्चालन हुने गर्दछ । यस आयोजनाबाट आ.व. ०५८/०५९ मा भएका कार्यहरू निम्नानुसार छन् ।

| क्र.सं. | कार्य विवरण | वार्षिक बजेट रू. हजारमा | लक्ष्य परिमाण | प्रगति परिमाण | कैफियत |
|---|---|---|---|---|---|
| **(क)** | **पूर्वाञ्चल** | | | | |
| १. | **क्षेत्रीय** संग्रहालय **धनकुटाको** प्रदर्शन कक्षमा रहेको लेवल कम्प्युटर टाइप गरी लेमिनेसन गर्ने र ब्रोसियर तयार गर्ने | ५० | १००% | १००% | |
| २. | झापा स्थित किचकवध, सप्तरीस्थित खोक्सारको परीक्षण उत्खनन् गर्ने | १५० | १००% | १००% | |
| ३. | जुभिङ्ग गा.वि.स. **सोलुखुम्बु** स्थित **स्तूप** जीर्णोद्धार गर्ने | ३०० | | | उपभोक्ता समिति मार्फत् गरिएको काम, प्रगती प्राप्त हुन नआएको । |
| **(ख)** | **मध्यमाञ्चल** | | | | |
| १. | सांस्कृतिक सम्पदा प्रवर्द्धन हुने भित्ते पात्रो उत्पादन गर्ने | १५० | १००% | १००% | |
| २. | विभागीय जीर्णोद्धार कार्यको फोटो लगत राख्ने | ३०० | १००% | १००% | |
| ३. | राष्ट्रिय अभिलेखालय स्थित प्राचीन हस्तलिखित ग्रन्थ र अभिलेखालयको स्ट्याग हल वातानुकूल गर्ने | १०६५ | १००% | १००% | |
| ४. | अभिलेखालयको ढल व्यवस्थित गर्ने | ६०० | १००% | १००% | |
| ५. | सतुंगल, किसिपिडी, बलम्बु, मातातिर्थ र थानकोटको शिलालेखहरूको लगत राख्ने | ५० | १००% | १००% | |
| ६. | भक्तपुरको तलेजु मन्दिर भित्रको, स्वयम्भु शान्तीपुरको, कुमारी घर र बाघ भैरव मन्दिरको भित्ते चित्रहरू र संग्रहालयहरूमा रहेको सामानहरूको रसायन संरक्षण गर्ने | २५० | १००% | १००% | |
| ७. | राष्ट्रिय संग्रहालयको सामानहरूको क्याटलगिङ्ग गर्ने र लेवल राख्ने | १०० | १००% | १००% | |
| ८. | जुद्ध जातिय कलाशालाको सिलिङ्ग मर्मत गर्ने | ३०० | १००% | १००% | |
| ९. | राष्ट्रिय मुद्रा संग्रहालयको परिचयात्मक पुस्तिका छाप्ने, सोकेसहरूको कपडा फेर्ने, मुद्रा क्याटलगिङ्ग गर्ने र मुद्रा खरिद गर्ने | १६० | १००% | १००% | |

| क्र.सं. | कार्य विवरण | वार्षिक बजेट रू. हजारमा | लक्ष्य परिमाण | प्रगति परिमाण | कैफियत |
|---|---|---|---|---|---|
| १०. | राष्ट्रिय कला संग्रहालय, भक्तपुरको स्टोर व्यवस्थित गर्ने | २०० | १००% | १००% | |
| ११. | सर्लाही फरदहवा गा.वि.स. स्थित महादेव मन्दिर जीर्णोद्धार गर्ने | ३५० | १००% | १००% | |
| १२. | नुवाकोट स्थित रंगमहल, इन्द्रचोक स्थित भैरव मन्दिर जीर्णोद्धार र गारत घरको बाँकी काम सम्पन्न गर्ने | २०५० | १००% | १००% | |
| १३. | नुवाकोट दरवार क्षेत्रको आकस्मिक कार्य अन्तर्गत पर्खाल मर्मत | ५० | १००% | १००% | |
| १४. | काठमाडौं उपत्यकाको असुरक्षित मूर्तिहरू र अभिलेखहरूको संरक्षण गर्ने | १०० | १००% | १००% | यस कार्यक्रममा शोभा भगवती स्थित मूर्तिहरू र अभिलेख संरक्षण गरिएको । |
| १५. | विभागको पुस्तकालय सुधार गर्ने | १०० | १००% | १००% | |
| १६. | संग्रहालयका कर्मचारीहरूलाई तालिम दिने | १०० | १००% | १००% | विभाग अन्तर्गतको र अन्य संग्रहालयको कर्मचारीहरू |
| १७. | दोलखा स्थित त्रिपुरासुन्दरी मन्दिर जीर्णोद्धार गर्ने | १५०० | १००% | १००% | जन सहभागितामा कार्य गरिएको । |
| १८. | विभागको गतिविधि सहित ३ वटा प्राचीन नेपाल र सालवसाली सर्भेक्षण कार्यको लगत प्रकाशित गर्ने | ३०० | १००% | १००% | लुभु, साँगा र बुङ्गमतीको सांस्कृतिक सम्पदाका लगत प्रकाशित गरिएको । |
| १९. | गोकर्ण स्थित भट्ट सत्तल जीर्णोद्धार गर्ने | २५० | १००% | १००% | |
| २०. | मैतीदेवी मन्दिर जीर्णोद्धार | ४७८ | १००% | १००% | |
| २१. | आकाश भैरव मन्दिर जीर्णोद्धार | १२०० | १००% | १००% | अनुदान दिने कार्य गरिएको |

| क्र.सं. | कार्य विवरण | वार्षिक बजेट रू. हजारमा | लक्ष्य परिमाण | प्रगति परिमाण | कैफियत |
|---|---|---|---|---|---|
| २२. | सिद्धेश्वर महादेव मन्दिर जीर्णोद्धार, जीतपुरफेदी | ६५० | १००% | १००% | |
| २३. | जनजाती संग्रहालय स्थापना गर्ने | ३०० | १००% | १००% | अनुदान दिने कार्य गरिएको |
| २४. | भक्तपुर नवदुर्गा भवानीको मुकुण्डो बनाउन अक्षय कोष स्थापना कार्य | २५० | १००% | १००% | अनुदान दिने कार्य गरिएको |
| २५. | पूर्णचण्डी मन्दिर स्थित पाटी जीर्णोद्धार | १५५० | १००% | १००% | |
| २६. | **कुम्भेश्वर** स्थित अशोक **स्तूप** संरक्षण | ३०० | १००% | १००% | |
| २७. | ठिमी न.पा. स्थित पाटी तथा ढुंगेधारा जीर्णोद्धार | ६०० | १०० | १०० | |
| २८. | चण्डेश्वरी मन्दिर, बनेपा | १५०० | १००% | १००% | अनुदान दिने कार्य गरिएको |
| **(ग)** | **पश्चिमाञ्चल** | | | | |
| २९. | नवलपरासी स्थित **रामग्रामको** उत्खनन् कार्य गर्ने | ५०० | १००% | १००% | |
| ३०. | रिडि रुरु क्षेत्र स्थित राधाकृष्ण मन्दिर जीर्णोद्धार | २४५ | १००% | १००% | |
| ३१. | क्षेत्रीय संग्रहालय पोखराको परिचयात्मक पुस्तिका | ५० | १००% | १००% | |
| ३२. | संग्रहालय हाता भित्र शौचालय निर्माण गर्ने | २०० | १००% | १००% | |
| ३३. | ढुङ्गा छापेर **बाटो** बनाउने (४५० फि. लामो) | १५० | १००% | १००% | |
| ३४. | लमजुङ दरबार तथा रानीकुवाको संरक्षण गर्ने | १५० | १००% | १००% | |
| ३५. | वुङ्गकोट स्थित भीमविरेश्वर तथा परिसर मर्मत जीर्णोद्धार तथा योजना तयार गर्ने | ६०० | १००% | १००% | |
| ३६. | कपिलवस्तु संग्रहालयको स्टाफ **क्वाटरको** छाना मर्मत कार्य | ५० | १००% | १००% | |
| ३७. | कालिका तथा उक्त क्षेत्रमा रहेको पोखरी समेत एकिकृत विकास गर्ने, कास्की | ३०० | १००% | १००% | |
| ३८. | वाग्लुङ स्थित कालिका मन्दिर परिसरको संरक्षण गर्ने | ३५० | १००% | १००% | उपभोक्ता समिति मार्फत् कार्य सम्पन्न भएको |

| क.सं. | कार्य विवरण | वार्षिक बजेट रू. हजारमा | लक्ष्य परिमाण | प्रगति परिमाण | कैफियत |
|---|---|---|---|---|---|
| ३९. | थनथाप माई कालि मन्दिर र कोट संरक्षण | ३०० | १००% | १००% | उपभोक्ता समिति मार्फत् कार्य सम्पन्न भएको |
| ४०. | पाल्पा स्थित दरबारको मूल प्रवेशद्वार जीर्णोद्धार | ११५५ | १००% | १००% | |
| (घ) | **मध्यपश्चिमाञ्चल** | | | | |
| ४१. | काक्रे विहारको जीर्णोद्धार गर्न अध्ययन अनुसन्धान गरी नक्सा, ल.ई. सहितको प्रतिवेदन तयार गर्ने | २०० | १००% | १००% | |
| (ङ) | **सुदूर पश्चिमाञ्चल** | | | | |
| ४२. | डडेल्धुरा स्थित अमरगढी जीर्णोद्धार सम्पन्न गर्ने | ६५० | १००% | १००% | |
| ४३. | वनारसको साम्राज्येश्वर मन्दिरसंगैको घर खरिद गरी मर्मत गर्ने | २२२५ | १००% | १००% | वृद्धाश्रमको लागि घर खरिद मा. मन्त्रीज्यूबाट उद्घाटन भई वृद्धाहरू बस्न थालेको। |
| ४४. | प्रयोगशालाको आ.व. ०५७/५८ मा छाना मर्मतमा विनियोजित रकमले नपुगेको रकम आ.व. ०५८/५९ मा भुक्तानी दिने विभागीय निर्णय भए वमोजिम रकम दिएको | १९२ | १००% | १००% | |
| ४५. | प्रयोगशालाका लागि रसायन खरिद गर्ने | ४८ | १००% | १००% | |

पुरातात्त्विक स्थल संरक्षण तथा सुधार आयोजनामा अधिराज्यभरि रहेका स्मारकहरूको अपर्झट आइपर्ने आपतकालीन कार्य तथा जनसहभागितामा गर्ने कार्यहरू गर्न समेत एकमुष्ट रकमको व्यवस्था गरिएको थियो । उक्त रकमबाट आ.व. ०५८/५९ मा निम्न स्मारकहरूको संरक्षण तथा उल्लेखित अन्य कार्यहरू गरिएको थियो ।

| क.सं. | आपतकालिन संरक्षण कार्यहरू | वार्षिक बजेट रू. हजारमा | लक्ष्य परिमाण | प्रगति परिमाण | कैफियत |
|---|---|---|---|---|---|
| १. | नील सरस्वती मन्दिरसंगैको पाटी निर्माण असुविधालाई मध्यनजर राखि पाटी निर्माण गरिएको । | ६००।- | १००% | १००% | भक्तजनहरूको असुविधालाई मध्य नजर राखी पाटी निर्माण गरिएको |
| २. | चाँगु नारायण प्राङ्गण स्थित भूपालेन्द्र मल्लको सालिक पुन: जडान | १० | १००% | १००% | चोरी भई प्राप्त भएको सालिक पुन: जडान गरिएको । |

| क.सं. | आपतकालिन संरक्षण कार्यहरू | वार्षिक बजेट रू. हजारमा | लक्ष्य परिमाण | प्रगति परिमाण | कैफियत |
|---|---|---|---|---|---|
| ३. | मनमैजु गा.वि.स. स्थित मनमैजु मन्दिर जीर्णोद्धार | १०८ | १००% | १००% | यस मन्दिरको जीर्णोद्धार कार्यमा ५०% जनसहभागिता भएको । |
| ४. | वोडे स्थित महालक्ष्मी मन्दिर जीर्णोद्धार | १०० | १००% | १००% | यस मन्दिरको जीर्णोद्धार ५०% जनसहभागिता भएको |
| ५. | थापाथली स्थित शिव पाञ्चायन मन्दिरमा रंगरोगन | १४ | १००% | १००% | सार्क शिखर सम्मेलनको लागि गरिएको । |
| ६. | भक्तपुरको सैनिक पोष्ट निर्माण | ४५ | १००% | १००% | तलेजु मन्दिरको सुरक्षाको लागि खटिएका सैनिकहरूको लागि आवश्यक भएकाले निर्माण गरिएको । |
| ७. | नुवाकोट स्थित भीमसेन मन्दिरको आकाश भैरव मूर्ति संरक्षण | २५ | १००% | १००% | मूर्ति जीर्ण भएकोले नयाँ बनाई जडान गरिएको । |
| ८. | बालकुमारी मन्दिर ल.पु.को टुँडाल मर्मत | १० | १००% | १००% | |
| ९. | कास्की स्थित रतन पाण्डे मन्दिरको प्राङ्गणमा ढुङ्गा छाप्ने | १५ | | | समितिका अध्यक्ष इश्वर वराललाई रकम उपलब्ध गराई दिएको, कार्य प्रगती प्राप्त नभएको । |
| १०. | गोकर्ण सत्तलको मर्मत | १०० | १००% | १००% | स्वीकृत कार्यक्रमबाट सत्तलको मर्मत गरी प्राङ्गण सुधार गर्न नपुग रकम थप गरिदिएको । |

| क्र.सं. | आपतकालिन संरक्षण कार्यहरू | वार्षिक बजेट रू. हजारमा | लक्ष्य परिमाण | प्रगति परिमाण | कैफियत |
|---|---|---|---|---|---|
| ११. | सिद्धेश्वर महादेव मन्दिर, जीतपुर फेदीको जीर्णोद्धार | १०० | १००% | १००% | स्वीकृत कार्यक्रममा विनियोजित रकम नपुग भएकोले थप गरिदिएको । |
| १२. | सुर्खेत संग्रहालयको झ्याल ढोका मर्मत सम्भार | ६५ | १००% | १००% | संग्रहालयको सुरक्षाको लागि झ्याल ढोकाहरूको मर्मत गरिएको । |

## २. विश्व सम्पदा संरक्षण योजना

यस योजना अन्तर्गत काठमाडौं उपत्यका भित्रको विश्व सम्पदा सूचिमा परेका संरक्षित स्मारक क्षेत्र भित्र रहेका (हुनमान ढोका, ललितपुर, भक्तपुर दरवार क्षेत्रहरू, स्वयम्भू, चाँगु र बौद्ध) स्मारकहरूको संरक्षण, सम्वर्द्धन तथा वातावरण सुधारका कार्यहरू समावेश गरिएका छन् । यस योजनाबाट सम्पन्न भएका कार्यहरू निम्न अनुसार रहेका छन् ।

| क्र.सं. | कामको विवरण | वार्षिक बजेट रू. हजारमा | लक्ष्य परिमाण | प्रगति परिमाण | कैफियत |
|---|---|---|---|---|---|
| १. | काठमाडौं उपत्यकामा **पाँचवटा** संरक्षित स्मारक क्षेत्रको स्मारकहरू वर्गीकरणका लागि विवरण तयार गर्ने | ४०० | १००% | १००% | |
| २. | विश्व सम्पदा सम्बन्धी प्रचार प्रसार कार्यक्रम | २०० | १००% | १००% | |
| ३. | विश्व सम्पदा क्षेत्रमा आइपर्ने आकस्मिक संरक्षण कार्यक्रम | २९९ | १००% | १००% | |
| ४. | अमात्य सत्तल जीर्णोद्धार गर्न विस्तृत नक्सा सहितको ल.ई. फोटो तयार गर्ने तथा पर्खाल र ढोका निर्माण गर्ने | १०० | १००% | १००% | |
| ५. | चाँगु नारायण मन्दिरको माथिल्लो छाना जीर्णोद्धार कार्य सम्पन्न गर्ने | ७०० | १००% | १००% | |
| ६. | भ.पु. तव सत्तल जीर्णोद्धार कार्य सम्पन्न गर्ने | १२३६ | १००% | १००% | |
| ७. | भ.पु. द्विमाजु चोक जीर्णोद्धार कार्य सम्पन्न गर्ने | २०० | १००% | १००% | |
| ८. | भ.पु. ५५ झ्याले दरवार जीर्णोद्धार गर्ने | १४ | १००% | १००% | |
| ९. | पाटन दरवार दक्षिण लङ (पहिले अदालत बसेको भाग) जीर्णोद्धार गर्न विस्तृत नक्सा सहितको ल.ई. फोटो तयार गर्ने । | १०० | १००% | १००% | |

| क्र.सं. | कामको विवरण | वार्षिक बजेट रू. हजारमा | लक्ष्य परिमाण | प्रगति परिमाण | कैफियत |
|---|---|---|---|---|---|
| १०. | ल.पु. चामुण्डा मन्दिर जीर्णोद्धारको बाँकी कार्य सम्पन्न गर्ने | १५० | १००% | १००% | |
| ११. | स्वयम्भू प्रांगणका बाँकी १५ घरहरूको मोहडा सुधारमध्ये एउटा घरको सुधार गर्ने | ६०० | १००% | १००% | |
| १२. | हनुमान ढोका स्थित महाविष्णु मन्दिर जीर्णोद्धार गर्ने | ३००० | १००% | १००% | |
| १३. | सार्क सम्मेलनको लागि विशेष कार्यक्रम सम्पन्न गर्ने | १२०० | १००% | १००% | |
| | (क) भक्तपुर तलेजु मन्दिर भैरव मन्दिर आदि आठ स्मारकहरूको मर्मत संभार तथा रंगरोगन गर्ने | ६०० | | | |
| | (ख) ललितपुर दरवार क्षेत्रको हरिशंकर मन्दिर, मूल चोकको चार नारायण मन्दिर स्वर्ण मन्दिरसंगैको पाटी मर्मत र वातावरण सुधार कार्य | ४४३ | | | |
| | (ग) स्वयम्भू स्थित प्रतापपुर, अनन्तपुरको रंगरोगन र ३ वटा पाटीको छाना मर्मत तथा वातावरण सुधार कार्य | ७५ | | | |
| | (घ) हनुमानढोका स्थित कुमारी घर, च्यासी देवल, सरस्वती मन्दिर र शिव मन्दिरको छाना मर्मत कार्य | ५७ | | | |
| | (ङ) बौद्ध स्तूपको मूलगेट रंगरोगन | २० | | | |

## ३. गोरखा दरवार क्षेत्र संरक्षण परियोजना

यस परियोजना अन्तर्गत गोरखाका माथिल्लो तथा तल्लो दरवार क्षेत्र र त्यसको परिसरमा रहेका स्मारकहरूको संरक्षण, प्रतिमा स्थलको सुधार तथा विकास आदि कार्यहरू पर्दछन् । यस परियोजनाबाट भएका कार्यहरूको विवरण निम्नानुसार रहेका छन् ।

| क्र.सं. | कामको विवरण | वार्षिक बजेट रू. हजारमा | लक्ष्य परिमाण | प्रगति परिमाण | कैफियत |
|---|---|---|---|---|---|
| १. | कार्यालय प्रमुखको आवास गृह | ७०० | १००% | १००% | |
| २. | संग्रहालय खोल्नको लागि तयारी गर्ने | ४०० | १००% | १००% | |
| ३. | पृथ्वी प्रतिमा स्थल पूर्वपट्टिको भागको कार्य | | | | |

| क्र.सं. | कामको विवरण | वार्षिक बजेट रू. हजारमा | लक्ष्य परिमाण | प्रगति परिमाण | कैफियत |
|---|---|---|---|---|---|
| १०. | ल.पु. चामुण्डा मन्दिर जीर्णोद्धारको बाँकी कार्य सम्पन्न गर्ने | १५० | १००% | १००% | |
| ११. | स्वयम्भू प्रांगणका बाँकी १५ घरहरूको मोहडा सुधारमध्ये एउटा घरको सुधार गर्ने | ६०० | १००% | १००% | |
| १२. | हनुमान ढोका स्थित महाविष्णु मन्दिर जीर्णोद्धार गर्ने | ३००० | १००% | १००% | |
| १३. | सार्क सम्मेलनको लागि विशेष कार्यक्रम सम्पन्न गर्ने | १२०० | १००% | १००% | |
| | (क) भक्तपुर तलेजु मन्दिर भैरव मन्दिर आदि आठ स्मारकहरूको मर्मत संभार तथा रंगरोगन गर्ने | ६०० | | | |
| | (ख) ललितपुर दरवार क्षेत्रको हरिशंकर मन्दिर, मूल चोकको चार नारायण मन्दिर स्वर्ण मन्दिरसंगैको पाटी मर्मत र वातावरण सुधार कार्य | ४४३ | | | |
| | (ग) स्वयम्भू स्थित प्रतापपुर, अनन्तपुरको रंगरोगन र ३ वटा पाटीको छाना मर्मत तथा वातावरण सुधार कार्य | ७५ | | | |
| | (घ) हनुमानढोका स्थित कुमारी घर, च्यासी देवल, सरस्वती मन्दिर र शिव मन्दिरको छाना मर्मत कार्य | ५७ | | | |
| | (ङ) बौद्ध स्तूपको मूलगेट रंगरोगन | २० | | | |

## ३. गोरखा दरवार क्षेत्र संरक्षण परियोजना

यस परियोजना अन्तर्गत गोरखाका माथिल्लो तथा तल्लो दरवार क्षेत्र र त्यसको परिसरमा रहेका स्मारकहरूको संरक्षण, प्रतिमा स्थलको सुधार तथा विकास आदि कार्यहरू पर्दछन्। यस परियोजनाबाट भएका कार्यहरूको विवरण निम्नानुसार रहेका छन्।

| क्र.सं. | कामको विवरण | वार्षिक बजेट रू. हजारमा | लक्ष्य परिमाण | प्रगति परिमाण | कैफियत |
|---|---|---|---|---|---|
| १. | कार्यालय प्रमुखको आवास गृह | ७०० | १००% | १००% | |
| २. | संग्रहालय खोल्नको लागि तयारी गर्ने | ४०० | १००% | १००% | |
| ३. | पृथ्वी प्रतिमा स्थल पूर्वपट्टिको भागको कार्य | | | | |

| क्र.सं. | कामको विवरण | वार्षिक बजेट रू. हजारमा | लक्ष्य परिमाण | प्रगति परिमाण | कैफियत |
|---|---|---|---|---|---|
| | ७. नासिका मन्दिर परिसर, पनौती | ६०० | | | " " |
| | ८. नित्यनाथ मन्दिर, पनौती | ११०० | | | " " |
| **(ख)** | **कृषि कार्यक्रम** | | | | |
| | १. बाखापालन | ४३०० | १००% | १००% | |
| | २. कृषि फर्म सम्बन्धी कार्यहरू | १००० | १००% | १००% | |
| | ३. मौरी पालन | ३५०० | १००% | १००% | |

**धार्मिक नाच तथा जात्रा पर्व**

माथी उल्लेखित विकास कार्यक्रमहरू वाहेक यस विभागबाट काठमाडौं उपत्यकामा प्राचीन समयदेखि प्रचलनमा रहेको विभिन्न धार्मिक नाच तथा जात्रा पर्वहरू निरन्तर रूपमा सञ्चालन भइरहोस् भन्ने उद्देश्यले यी नाच तथा जात्रा पर्वहरूलाई वार्षिक रूपमा आर्थिक अनुदान दिने गरेको छ। हुनत अहिलेको सन्दर्भमा यहाँबाट उपलब्ध गराइने रकम न्यून रहेकोले २०५३ सालमा मन्त्रीपरिषद्को निर्णयबाट अनुदान रकममा पचास प्रतिशत वृद्धि गरिएको र प्रत्येक दुई वर्षमा दश प्रतिशतले थप वृद्धि गर्ने गरिएको छ। साथै नाचको प्रकृति कलाकारको संख्या र औचित्य हेरि प्रत्येक पाँच वर्षमा नाचको लुगा फेर्ने गर गहनाको मर्मत गर्न एकमुष्ट रकम दिने व्यवस्था पनि छ। आ.व. ०५८/०५९ मा निम्न नाच तथा जात्राहरूलाई निम्नानुसारको आर्थिक अनुदान उपलब्ध गराइएको थियो।

**विभिन्न परम्परागत नाच तथा जात्राहरूलाई आ.व. ०५८।५९ मा यस विभागबाट दिइएको आर्थिक अनुदानको विवरण**

| क्र.सं. | नाच तथा जात्रा | नाइके | अनुदान रकम |
|---|---|---|---|
| १. | महाकाली नाच (भ.पु.) | सुनिल राज दैवज्ञ | ९,६८०।- |
| २. | महाकाली नाच (भ.पु.) | रामचन्द्र खर्वुजा | ७,२६०।- |
| ३. | महाकाली नाच (भु.पु) | लक्ष्मीभक्त मूस्याजु | ७,२६०।- |
| ४. | महाकाली नाच (भ.पु.) | रत्नलाल डण्डेख्या | ७,२६०।- |
| ५. | महाकाली नाच (भ.पु.) | रामलाल लोहला | ७,२६०।- |
| ६. | महाकाली नाच (भ.पु.) | दानबहादुर फैजु | ७,२६०।- |
| ७. | रामचन्द्र नाच (भ.पु) | रत्नलाल डण्डेख्या | ७,२६०।- |
| ८. | दश अवतार नाच (त्रिपुरेश्वर) | शंकरप्रसाद श्रेष्ठ | १०,८९०।- |
| ९. | सव भक्कु नाच (हल्चोक) | माइला पुतुवार | ६,०५०।- |
| १०. | माघ जात्रा (वटु टोल) | शालीग्राम तण्डुकार (वडा सदस्य) | ४,८४०।- |
| ११. | हात्तीनाच (किलागल) | तुलसी नारायण महर्जन | ६,०५०।- |

| क्र.सं. | कामको विवरण | वार्षिक बजेट रू. हजारमा | लक्ष्य परिमाण | प्रगति परिमाण | कैफियत |
|---|---|---|---|---|---|
| | ७. नासिका मन्दिर परिसर, पनौती | ६०० | | | " " |
| | ८. नित्यनाथ मन्दिर, पनौती | ११०० | | | " " |
| **(ख)** | **कृषि कार्यक्रम** | | | | |
| | १. बाखापालन | ४३०० | १००% | १००% | |
| | २. कृषि फर्म सम्बन्धी कार्यहरू | १००० | १००% | १००% | |
| | ३. मौरी पालन | ३५०० | १००% | १००% | |

**धार्मिक नाच तथा जात्रा पर्व**

माथी उल्लेखित विकास कार्यक्रमहरू वाहेक यस विभागबाट काठमाडौं उपत्यकामा प्राचीन समयदेखि प्रचलनमा रहेको विभिन्न धार्मिक नाच तथा जात्रा पर्वहरू निरन्तर रूपमा सञ्चालन भइरहोस् भन्ने उद्देश्यले यी नाच तथा जात्रा पर्वहरूलाई वार्षिक रूपमा आर्थिक अनुदान दिने गरेको छ। हुनत अहिलेको सन्दर्भमा यहाँबाट उपलब्ध गराइने रकम न्यून रहेकोले २०५३ सालमा मन्त्रीपरिषद्को निर्णयबाट अनुदान रकममा पचास प्रतिशत वृद्धि गरिएको र प्रत्येक दुई वर्षमा दश प्रतिशतले थप वृद्धि गर्ने गरिएको छ। साथै नाचको प्रकृति कलाकारको संख्या र औचित्य हेरि प्रत्येक पाँच वर्षमा नाचको लुगा फेर्न गर गहनाको मर्मत गर्न एकमुष्ट रकम दिने व्यवस्था पनि छ। आ.व. ०५८/०५९ मा निम्न नाच तथा जात्राहरूलाई निम्नानुसारको आर्थिक अनुदान उपलब्ध गराइएको थियो।

**विभिन्न परम्परागत नाच तथा जात्राहरूलाई आ.व. ०५८।५९ मा यस विभागबाट दिइएको आर्थिक अनुदानको विवरण**

| क्र.सं. | नाच तथा जात्रा | नाइके | अनुदान रकम |
|---|---|---|---|
| १. | महाकाली नाच (भ.पु.) | सुनिल राज दैवज्ञ | ९,६८०।- |
| २. | महाकाली नाच (भ.पु.) | रामचन्द्र खर्बुजा | ७,२६०।- |
| ३. | महाकाली नाच (भु.पु) | लक्ष्मीभक्त मूस्याजु | ७,२६०।- |
| ४. | महाकाली नाच (भ.पु.) | रत्नलाल डण्डेख्या | ७,२६०।- |
| ५. | महाकाली नाच (भ.पु.) | रामलाल लोहला | ७,२६०।- |
| ६. | महाकाली नाच (भ.पु.) | दानबहादुर फैजु | ७,२६०।- |
| ७. | रामचन्द्र नाच (भ.पु) | रत्नलाल डण्डेख्या | ७,२६०।- |
| ८. | दश अवतार नाच (त्रिपुरेश्वर) | शंकरप्रसाद श्रेष्ठ | १०,८९०।- |
| ९. | सव भक्कु नाच (हल्चोक) | माइला पुतुवार | ६,०५०।- |
| १०. | माघ जात्रा (वटु टोल) | शालीग्राम तण्डुकार (वडा सदस्य) | ४,८४०।- |
| ११. | हात्तीनाच (किलागल) | तुलसी नारायण महर्जन | ६,०५०।- |

| क्र.सं. | नाच तथा जात्रा | नाइके | अनुदान रकम |
|---|---|---|---|
| १२. | गाउने ढाडी (यट्खा) | सुर्यमान महर्जन | १,८१५।- |
| १३. | कार्तिक नाच (ल.पु.) | हरिमान श्रेष्ठ (व्यवस्थापक) | ३७,५१०।- |
| १४. | अष्टमातृका नाच (ल.पु.) | भाजुरत्न शाक्य (वडा अध्यक्ष) | २७,५००।- |
| १५. | लाखे नाच (मजिपाट) | लक्ष्मणराम रन्जित | ६,०५०।- |
| १६. | भीमसेन खट जात्रा (ल.पु.) | मंगल टोल सुधार संघ | ३,६३०।- |
| १७. | कृष्ण पुजा (ल.पु.) | कृष्ण पुजा सञ्चालन समिति | ३,६३०।- |
| १८. | न्यकुमतया जात्रा (ल.पु.) | न्यकु मतया जात्रा व्यवस्था समिति | १८,१५०।- |
| १९. | कार्तिक नाच (फर्पिङ्ग) | नारायण वलामी | १०,५००।- |
| २०. | निरञ्जना भगवती पूजा (नुवाकोट) | परशुराम पाध्या (पुजारी) | ६,०००।- |
| २१. | दश अवतार नाच (त्रिपुरेश्वर) | शंकरप्रसाद श्रेष्ठ | १०,०००।- |
| | **जम्मा** | | **२,०५,८५५।-** |

(पुनश्च: क्र.सं. १९, २०, २१ का नाच तथा जात्राको लागि पटके अनुदान दिने गरिएको छ । यसमध्ये दश अवतार नाचलाई सालवसाली दिने गरिएको रकममा नपुग भएकोले थप गरिदिएको हो ।)

श्री ५ को सरकारले घोषित संरक्षित स्मारक क्षेत्र भित्र आफ्नो हक भोगको जग्गामा घर भवन नयाँ निर्माण, पुन: निर्माण, मर्मत तथा थपघट गर्न चाहेमा घरधनीले नगरपालिकामा पेश गरेको नक्सा प्रचलित कानून वमोजिम पास गर्नु अगावै पुरातत्त्व विभागको स्वीकृती लिनुपर्ने प्रावधान रहेको छ । यसरी नगरपालिका मार्फत् स्वीकृतिको लागि प्राप्त नक्साहरू यस विभागद्वारा गठित प्राचीन संरक्षण सहयोग समितिको वैठकको प्रतिवेदन अनुसार सिफारिश गरी पठाउने गरिन्छ । यसरी आ.व. ०५८/०५९ मा हनुमान ढोका दरवार क्षेत्र भित्र ४ वटा, ललितपुर दरवार क्षेत्र भित्र १८ वटा, भक्तपुर दरवार क्षेत्र भित्र ६ वटा, बौद्ध क्षेत्र भित्र ९ वटा, स्वयम्भू क्षेत्र भित्र ४ वटा र पशुपती क्षेत्र भित्र एउटा गरी जम्मा ४१ वटा नक्साहरू स्वीकृतिको लागि सिफारिस गरिएको थियो ।

आर्थिक वर्ष ०५८/०५९ मा यस विभागबाट विभिन्न किसिमका ४,४१,०३३ थान हस्तकलाका सामानहरू जाँच गरी निर्यात गर्न जाँचपास प्रमाण पत्र दिइएको थियो ।

## प्राविधिक सहयोग

पुरातत्त्व विभागले स्थानीय निकायहरू तथा संघ-संस्था र व्यक्ति विशेषलाई स्मारक संरक्षण गर्ने काममा बढी जागरूक र सहभागी गराउने उद्देश्यले यी संघ-संस्थाहरूबाट गरिने स्मारक संरक्षण तथा जीर्णोद्धार कार्यमा आर्थिक अनुदान दिनुका साथै आवश्यक प्राविधिक सहयोग पनि उपलब्ध गराउने गरिआएको छ । आ.व. ०५८/०५९ मा यस विभागमा प्राप्त भएका निवेदनहरूको आधारमा निम्न स्मारकहरूको स्थलगत निरीक्षण गरी आवश्यक प्राविधिक प्रतिवेदन तयार गरी सम्बन्धित निकायलाई उपलब्ध गराउनुको साथै जीर्णोद्धार कार्य भएको समयमा पनि स्थलगत निरीक्षण गरी आवश्यक सरसल्लाह दिएको थियो ।

- जैसीदेवल जीर्णोद्धार कार्यान्वयन समितिको अनुरोधमा का.म.न.पा. वडा नं. २१ मा रहेको जैसीदेवल मन्दिरको आवश्यक प्रतिवेदन तयार गरी उपलब्ध गराई दिएको ।
- चोभार स्थित जल विनायक मन्दिर चारैतिरको चौघेरा सत्तल जीर्णोद्धार गर्न आवश्यक पुरातात्त्विक प्रतिवेदन तयार गरी छाउनी दरवारलाई उपलब्ध गराई दिएको ।
- इटुम्बहाल आँग:छें जीर्णोद्धार गर्न केशचन्द्र परावर्त महाविहार तदर्थ समिति का.म.न.पा.को निवेदन

अनुसार आवश्यक पुरातात्त्विक प्रतिवेदन तयार गरी सोही अनुसार जीर्णोद्धार गर्न उक्त समितिलाई उपलब्ध गराई दिएको ।

- श्री दयाश्वर महादेव बौद्धिक सनातन धर्म सेवा समाजको अनुरोधमा दयाश्वर मन्दिर जीर्णोद्धार गर्न आवश्यक प्राविधिक प्रतिवेदन तयार गरी सोही अनुसार गर्न उक्त समाजलाई उपलब्ध गराई दिएको ।
- काठमाडौं महानगरपालिका वडा नं. १२ को र वडा नं. २४ को अनुरोधमा ह्युमत टोल स्थित पाटीको शिलालेख उतार तथा भावार्थ तयार गरी आवश्यक सहयोग गरिदिएको ।
- काठमाडौं महानगरपालिका वडा नं. २३ ओम बहाल जोर गणेश स्थित नाटेश्वर मन्दिर जीर्णोद्धार गर्न वडा कार्यालयको अनुरोधमा आवश्यक प्राविधिक प्रतिवेदन तयार गरी उपलब्ध गराई दिएको ।
- बालकुमारी चपाल जीर्णोद्धार समितिको अनुरोधमा उक्त चपाल जीर्णोद्धार गर्न आवश्यक प्रतिवेदन तयार गरी समितिलाई उपलब्ध गराई दिएकोमा सो समितिबाट ५० प्रतिशत रकम जुटाई बाँकी ५० प्रतिशत यस विभागको कार्यक्रममा समावेश गरी गर्न आवश्यक स्वीकृति दिएको ।
- बागिश्वरी मन्दिर निर्माण समितिको अनुरोधमा देवघाटस्थित वागिश्वरी मन्दिर निर्माण गर्न आवश्यक ल.ई. नक्सा तथा प्राविधिक प्रतिवेदन तयार गरी सोही अनुसार गर्न सो समितिलाई उपलब्ध गराई दिएको
- नुवाकोट बौद्ध विहार जीर्णोद्धार एवं गुम्बा निर्माण तथा संरक्षण समितिलाई प्राविधिक प्रतिवेदन अनुसार गर्न प्रतिवेदन उपलब्ध गराई दिएको ।
- ललितपुर नगरपालिकाको अनुरोधमा वडा नं. १९ लगनखेल स्थित रत्न चैत्य महाविहारको वातावरण सुधार तथा उक्त पाटी मर्मत गर्न आवश्यक प्राविधिक सहयोग उपलब्ध गराई दिएको ।
- विश्व सम्पदा क्षेत्र भित्र चलचित्र तथा टेलिफिल्म छायाँकन गर्न र मापदण्ड अनुसार निजीघरको निर्माण, मर्मत सुधार कार्यमा प्राविधिक सहयोग उपलब्ध गराएको छ ।
- का.न.पा. वटु टोल स्थित नाटेश्वर गुठीको नाइकेको अनुरोधमा उक्त गुठीको भण्डारघर संरक्षण गर्न आवश्यक प्राविधिक प्रतिवेदन उपलब्ध गराई दिएको ।
- विभिन्न संघ-संस्थाको अनुरोधमा पचली स्थित सत्तल, पर्वत जिल्ला वडा नं. ३ स्थित पार्वती गुफा, वडा नं. ९ स्थित ठूलो पोखरी र लक्ष्मीनारायण मन्दिर तथा मुस्ताङ स्थित मुक्तिनाथ मन्दिर आदिको क्रमिक रूपमा कार्यक्रममा समावेश गर्ने गरी प्रतिवेदन तयार गरिएको छ ।
- पुरातत्त्व विभागले आर्थिक वर्ष ०५८/०५९ मा श्री संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयको विकास कार्यक्रममा समावेश निम्न स्मारकहरूको जीर्णोद्धार यस विभागको प्राविधिक रेखदेखमा सम्पन्न भएको थियो ।

  १. शंखमूल स्थित आठ शिवालयहरू,
  २. टेकु स्थित वमवीर विकटेश्वर मन्दिर, राधाकृष्ण मन्दिर, त्रिपुरेश्वर महादेव मन्दिर, जंग हिरण्य हेम नारायण मन्दिरको प्राङ्गणमा रहेको ६ देवलहरू, वारकृष्णेश्वर मन्दिर,
  ३. थापाथली स्थित राम मन्दिर (वैरागी अखाडा)

## वैदेशिक संस्थासंग संलग्न भएका कार्यहरू

पुरातत्त्व विभागले विभिन्न वैदेशिक संघ-संस्थाहरूसंग मिलेर संयुक्त रूपमा कार्य गर्ने गरी भएको सम्झौता र समझदारीमा निम्न कार्यहरूमा यस विभागको प्राविधिकहरूको संलग्नता रहेको थियो ।

- श्री ५ महेन्द्र प्रकृति संरक्षण कोषको अनुरोधमा मुस्ताङ स्थित थुप्चेन गुम्बा तथा झ्याम्पा गुम्बाको जीर्णोद्धारको प्राविधिक रेखदेख र लोमान्थाङ्ग पर्खालसंगै निर्माण हुने बाटो वारे आवश्यक प्राविधिक सहयोग गर्न प्राविधिक खटाइएको ।

  इटाली स्थित ISIAO (Italian Institute for Africa and Orient) संग सम्झौता भए अनुसार गोटीहवाको उत्खनन् कार्य जारी राखिएको ।

काठमाडौं भ्याली प्रिजर्भेसन ट्रष्टबाट जीर्णोद्धार भइरहेको इन्द्रपुर मन्दिर तथा यट्खा बहाल आँगःछेँमा प्राविधिक संलग्नता रहेको ।